# Laxmi Jewellers

Since 1998





Inside India Imports in Irving

















IRVING, TX, Tel: 214-441-0091

Web: www.laxmi22k.com

# यस पटक,

अंक १, वर्ष १, मार्च २०१३

कभर स्टोरी
युवा भविष्य मात्र हैनन् वर्तमान पनि हुन् ।
२४

गन्तव्य नेपाल
मनमोहक रारा
२२

सडक
के फरक छ सडक
१६

१९

# Publisher Note



In year 2005 during an orientation in a University here in the States I was asked to introduce myself. I said "I am from Nepal". Puzzled eyes were all over the place as if I just had pronounced the name of a new planet. "A small country in between India and China", I had to jump into rescue, "Mount Everest", "Buddha", I added some more lifelines to a mystery. Now everyone knew what I was talking about. Within these eight years, synonyms and adjectives to describe our country might have changed, "139th/174th county in most corrupted list", "the country with the most power outage" (load shedding- probably one of the most used word among Nepalese), "the country with the most dangerous roads and airports in the world".

My point is we have too much negativity to share with others. Ladies and gentlemen we present you "Hamro Patrika"-the first ever cross cultural magazine of its kind with a story telling attitude from our own society which will not be focused on throwing negativities around but will work on finding positiveness. We already have seen many eye candy Nepali magazines in the market without much of a brain. For us we do not want to compromise with intellect and all those who have worked with us on this magazine share a respect and immense knowledge in their respective genre.

With your support and love we are sure to bring an awesome reading experience to you in future. We will definitely hit every cities of the United States gradually. I hope you all will appreciate our effort of bringing this monthly magazine to you.

Your Sincerley
**Sarita Gurung (Khadka)**
CEO, HamroPatrika

Year 1, Issue 1, March, 2013
Team हाम्रो पत्रिका

CEO: **Sarita Gurung (Khadka)**
Director: **Keshav Khadka**

Editor: **Ganesh Acharya**
Associate Editor: **Pramila Thapaliya**

Contributors:
**Pradeep Basyal**
**Prakash Timilsina**
**Dr. Nibedita Baral**
**Sabin Ektare**
**Aruna Ghimire**
**Prabin Baniya**
**Dhana Khatiwada**
**Jitu Nepal (Mundre)**
**Basant Basnet**
**Bhawana Jaisi**
**Gyanendra Paudel**
**Subass Gauli**
**Sanjeev Nepal**

Photographer: **Deepak Tripathi**

Designer
**Sandip Shrestha**
Yes! the Designer's Pvt. Ltd.

Printer:
abc printer

**Marketing**
Corporate Marketing Director
**Sanjeev Parajuli,** Texas, USA

Marketing Co-ordinator
**Dipendra Shrestha (Dee)**

Available on
All Nepali, Indian Stall of Dallas,
Newyork

Contact:
**Hamro Patrika**
Babarmahal, Kathmandu
Texas, USA
E-mail:
hamropatrika@hotmail.com
www.hamropatrikaonline.com

If you have any comment
write us on
**comments.hamropatrika@gmail.com**

If you have any messages send us
**msg.hamropatrika@gmail.com**

If you have relevant articles
pitch on
**article.hamropatrika@gmail.com**



# सम्पादकीय

## 'नौलो' प्रयास

'विख नभएको सर्प र इख नभएको मान्छे काम लाग्दैन ।' हामीभित्र पनि इख थियो, केही नयाँ गर्ने । 'जहाँ इच्छा त्यहाँ उपाय' यो अर्को भनाईले हामीलाई अझै हौंस्यायो, घाँसीले कुवा खनाएको देखेर भानुभक्त हौसिंए जस्तै भयौं हामी । **हाम्रो पत्रिका** जन्माउनुभन्दा पहिले यसको छलफलका क्रममा यदाकदा पाइला रोकिन नखोजेका पनि हैनन् । तर झट्ट सोच्यौं: अहिले नगरे कहिले गर्ने ? हामीले नगरे कसले गर्ने ? पाइला आफै सर्दै गए । विज्ञानको चमत्कारले दुई फरक फरक ठाउँमा भएका मान्छेहरुको बिहे सम्भव भएझैं संचारको चमत्कारले स्काइपी मार्फतै जन्म्यो, हाम्रो पत्रिका । त्यही बालक अहिले तपाईंको हातमा छ ।

हाम्रो पत्रिका हाम्रै पत्रिका हो । यसमा कुनै अपवाद समेटिएको छैन । तर यहाँ तपाईले देख्ने कुरा अरु दृष्यभन्दा फरक भने अवश्य हुन सक्छ । हामी यहाँ हाम्रो जन्मभुमि नेपाल र धेरै नेपालीको कर्मभुमि बनेको संयुक्त अधिराज्य अमेरिकाको समष्टिगत कुरा गर्छौं । कहिले सुख बाँड्छौं, कहिले दुःख साँट्छौं । तर तपाई सोच्नुहोला, उल्टो गंगा किन ? तर यसमा एउटा महत्वपूर्ण कारण छ ।

विद्यार्थीका रुपमा नेपालीहरु जाने प्रमुख देश हो, अमेरिका । अमेरिकाका लागि पनि नेपाल विदेशी विद्यार्थीहरुको संख्याका हिसाबले ११ औं राष्ट्र हो । विश्वका अरु सबै देशहरुमा सबैभन्दा बढी रेमिट्यान्स पठाउने देश पनि अमेरिका नै हो । नेपालतीर फर्केर हेरौं: नेपालको कुल ग्राहस्थ उत्पादनमा २३ प्रतिशत रेमिट्यान्सकै योगदान छ । यसकारण पनि अब संयुक्त राज्य अमेरिका र नेपालका बीचका सांस्कृतिक, पुरातात्विक, ऐतिहासिक विषयवस्तुहरुको भिन्नता र समता खोज्ने बेला आएको छ । यसकारण पनि हामीले हाम्रो पत्रिकालाई नेपाल र संयुक्त राज्य अमेरिकाबीचको पहिलो 'क्रस-कल्चरल स्टोरीटेलर' पत्रिका बनाउने लक्ष्य लिएका छौं ।

लक्ष्य लिएर मात्रै पनि हुँदैन, त्यसका लागि चालिने कदम र तय गरिएका उद्देश्यहरु समेत पुरा गर्दै जानुपर्छ । हामीले यो पत्रिका मार्फत नेपाल र अमेरिकाबीचको भ्रात्तृत्व अझै विकास गर्ने, अमेरिकामा समेत नेपाली प्रकाशनलाई द्रुतता दिने, अमेरिकाबाट नेपालले र नेपालबाट अमेरिकाले सिक्न सक्ने कुराहरुबारे विस्तृत विवरण प्रस्तुत गर्ने प्रयास गर्नेछौं । नेपालमा भएका प्रमुख घटनाहरुलाई समेत समावेश गरी हामी यो पत्रिका मार्फत् एउटा प्याकेज तपाईहरुको साथमा प्रस्तुत गरेका छौं । पत्रिकाप्रति तपाईको सुझाव सल्लाह पठाउन नबिर्सनुहोला । साथै नयाँ वर्ष २०१३ को शुभकामना ।

नमस्कार ।

**गणेश आचार्य**
radio.ganesh@gmail.com

युनेस्कोको विश्व सम्पदा सुचिमा सुचीकृत भक्तपुर दरबार स्क्वायर काठमाडौं उपत्यकाको एउटा प्रमुख पर्यटकीय गन्तव्य हो । यहाँका प्रत्येक निर्माणहरुमा कलात्मकता र सुन्दरता लुकेको छ । यहाँको ५५ झ्याले दरबार, तलेजु लगायतका ठाँउ प्रसिद्ध छन् ।

**तस्बिर: सबिन एकतारे**

# Melody
## SALOON

*Very Professional*

*Desi Haircut &*
*Indian Barbering*
*Performed Here*


Men's Haircut


Women's Haircut

## Our Services

Haircut (Men's, Women's, Kids)
Color / Highlights / Lowlights
Facial / Skin Treatment
Eyebrow Threading / Wax
Scalp Massage
Henna
Perm & More


PERM


Highlight/Color


Threading & Wax


Dermalogica


Asta Berry


Hair Relaxer/Straightning

Haircut (Men's) : $ 9.99, Eyebrow : $ 3.99

Mon-Fri 10am-7pm
Sat 10am-8pm
Sun 12pm-6pm

3561 N, Beltline RD, Irving, TX, 75062
Tel: 817-793-4113, 469-487-8775

FREE Eyebrow on
Color, Highlight & Facial











**Fine Indian, Nepalese & Tibetan Restaurant & Bar**

**Guest Hall Available up to 50 Persons**

Restaurant Open:
11:30 am-Midnights

Now fast food counter available
for express take out & delivery
Please contact: **718-507-1114**





**अब दिल्ली हाइट्मा इन्डियनको साथै नेपाली र तिब्बतीयन खाना पनि ।**

37-66 74st. Jackson Heights, NY 11372, Phone: (718) 507-1111,1114, Fax: (718) 507-1113

any food

anytime




anywhere

any occasion

Two Party Halls

Now Hiring
Waiter/Waitresses

GREATER INDIAN CUISINE

*स्वादिष्ट नेपाली खानाको लागि सम्झनुहोस*

**Hours**
Sunday Brunch 10:30am-3:00pm
Speedy Lunch Buffet, Mon-Sat, 11:00am-3:00pm
Ala Carte Dinner, Sun-Thurs, 5:00pm-10:pm
Banladeshi Night Buffet, Friday, 5:00pm-11:00pm
Greater Indian Night Buffet, Saturday, 5:00pm-11:00pm

**Basmati Grill**
2427 West Airport Fwy. Irving, Tx
tel 972-255-5555, cell: 469-261-4852
info@basmatigrill.com, www.basmatigrill.com

# facebook | twitter




देवगण
**पृथ्वी विभाग**
**विगार तथा विनास मन्त्रालय**

**पृथ्वी विनास म्यादथप वारे अत्यन्त जरुरी सूचना**

प्रथमपटक प्रकाशित मितिः २०६९/०८/३०

लामो समय देखी चलदै आयको पृथ्वी नष्ट पार्ने विषमा भएको बहस बिना निस्कर्स बैठक सरेको र अर्को सूचना प्रकाशित नभए सम्मको लागि पृथ्वी विनास को म्याद थप गरिएको सूचना सबै मानव जातिलाई अवगत गराउदछौं । साथै यसै सूचना मार्फत आगमि बैठकको लागि सहमति जुटाउन हुन सम्पूर्ण देवगाणहरुमा हार्दिक अनुरोध गर्दछौं । र यो सुचना बाहेक अरु सुचना हरुलाई आधार वनाई भुटा प्रचार प्रसार गर्ने गिरोह, व्यक्तिलाई देवगण विधान धारा ४ को दफा ३/५ को गलत प्रचार प्रसार मा अजिवन जेल सजाए तथा हर्जाना असुली हुने सबैमा अवगत गराउछौं ।

**महाविनासकारी**
**एमराज तथा विभाग**



**Räbi Mishrä** @rabimishra 4h
नाममा जथाभाबी "कली" नजोडम है | धुर्बे आइपुग्ला फेरी :P
Expand



**©बाबाजी™** @baabajee 40m
संचारसम्बन्धि सरकारी नितिहरुको रिभ्यु कार्जकरममा बसेको २०१२ सालका नितिहरु पनि कृयाशिल रैचन् । अनि कसरी सुधिन्च मीडिया। दोषी राज्य नै हो।
Expand



**Pramesh Kandel**
लाज, डर र घिन लागेन
ऋण लाग्यो दिन लागेन

सकुनी सँग पासा खेलियो
एक, दुई र तीन लागेन



**Ananta Koirala**
हेर त... तिम्रो आँखाको चमक, अनि तिम्रो मुस्कान... तिम्रा फोटाहरुमा छरपस्ट फिँजारिएका छन्...! याद छ, तिमीले बोलेका सम्वादहरु !... पटक्कै सुहाएन त्यो संवाद र भावभंगी...! अभिनय गर्दा पो समय र स्थान फरक थियो त... सम्पादन गरिसक्दा ती फोटो र संवाद एकै ठाउँमा मिसिए र तिम्रो अभिनय फिक्का भइदियो ;-) (अभिनय गरेर सान्त्वना खोज्नेहरुमा समर्पित :P)
Like · Comment · Share · 5 hours ago near Kathmandu ·



**Daswon** @spacenepal 23m
कसैले भन्दैमा कलम चलाउन छाडिन्न कलमको शाहारामा निर्दोषको बलि पनि चडाइदैन!भुक्नेहरु भुकी राख यो कलमको मसि अझै सकिएको छैन
Expand



**Junu Bhattarai**
तपाईको हासोले कसैको उदाशिन्तालाई जीत्न सक्छ , त्यसैले दिल खोलेर हासौं
Like · Comment · Share · 21 hours ago ·



**Rabin Pokhrel**
some people work all day, some people are exhausted by evening and some people prepare for the next day. Thus, one needs to respect sleep.
Like · Comment · Share · 4 hours ago ·



**Sushil Sharma** @sushilshrma 1h
ELEPHANTINE LOVE:"'धुर्बे' हात्तीले दुई वर्षअघि भ्यालेन्टाइन डे ताका चञ्चल कली नाम गरेकी पोथी हात्तीलाई भगाएर लगेको थियो।"
Retweeted by Narayan Acharya
Expand

**Ushaft** @ushaft 32m
प्रधानमन्त्री भट्टराईले बरु विजय गच्छदार र देवेन्द्र पौडेल उपाध्यक्षहरु हुनेगरी आफ्नो अध्यक्षतामा नयाँ पार्टी खोले हुन्छ। नाटक गर्नै पर्दैन।
Retweeted by Indra Dhoj Kshetri
Expand



**Arjun Apawad**
...............
सुरुमा मलाई मन परेन,
पछि उसलाई मन परेन ।
यसपटक,
दुवैलाई मन परेको थियो,
तर
समयलाई मन परेन ।।
......................
Like · Comment · 18 hours ago near Kathmandu ·



**Kalpana Bhandari** @imagineim 22m
आजभोली धुब नाम गरेकाहरुलाई साहै समस्या परेछ,...भन्न थालेछन् ओई बहुलाहा हात्ती
Expand



**Narainनारायनदाई** @yak2yeti 19m
जाडोमा आफुले तापेको आगो अर्कालाई छोडेर चिसो सिंढीमा कटकटिएर कोहि बस्दैन #सहमति #बाबुराम #असफल रास्ट #सत्ता #स्वार्थ #केहोके #भर्म #राजनिती
Expand



**Bhawana Na**
Already two third of world's energy is consumed in cities by half of world's population #challenges of Balance.
Like · Comment · 4 hours ago ·



**Indra Dhoj Kshetri**
धुर्वेका नाममा जोक गर्नु भनेको त्यसले मारेका १५ जनाको लाशमाथि हाँस्नु हो । सँसारमा मान्छेको कल्याणभन्दा ठुलो पशुको हुन सक्दैन । मान्छेभन्दा पशु ठुलो हुनसक्दैन ।
Like · Comment · Share · 2 hours ago ·

# 'Beyond Imagination'

On my first day in Nepal, jet lagdue to a 9 hour 45 minute time difference left me feeling disoriented and some normal tasks seemed daunting.There is always a learning curve for certain activities in a new country and little things, like learningwhich electrical sockets worked for myelectronics or negotiating the price of a taxi, seemed like huge challenges.Not to mention my introduction to the load shedding scheduleof daily power outages!

I woke up extremely early on my first morning in Kathmandu and lay in bed listening to the sounds of the city waking up. I heard vehicles making deliveries, shop keepers opening the gates to their stores, dogs barking, children heading to school, bells ringing,andrickshaws being pulled.Next, I spent hours exploring the busy streets of Kathmandu and trying to learn my way around, though there are few street names to be found on a map. There is vast amount of energy packed into the extremely narrow streets of Kathmandu and it was exciting to meander through the city and observe everything around me. The history of the city struck me immediatelywith the architecture of old homesor temples clearly unique to those of the modern structures surrounding them.

Traffic in Nepal is definitely a different experience than in the United States. Streetlights are rare, motorcycles run rampant, seatbelts and bike helmets are optional (for passengers), and it's common to see a cow walking down the center of the road. The traffic appears to be 'organized chaos,'which is automatically understood by



"Traffic in Nepal is definitely a different experience than in the United States. Streetlights are rare, motorcycles run rampant, seatbelts and bike helmets are optional (for passengers), and it's common to see a cow walking down the center of the road."

"I am a big foodie and it has been exciting to be introduced to many Nepali dishes - everything from momo andchatamari to beaten rice and buff sukuti. The food alsoisn't as spicy as I initially expected and I would love to learn how to cook Nepali food."







Nepalis. On a rainy afternoon at the end of the monsoon season, I quickly learned that no one was going to voluntarily stop for a pedestrian crossing the road. Standing at the large intersection of Durbar Marg soaking with rain I realized that, if I didn't want to stand at the corner all day, I needed to become more confident stepping out to cross.

For some reason before arriving, I had the false impression that I would only eat dhal bhaat in Nepal, but from day one I learned that there are variety of other options.I am a big foodie and it has been exciting to be introduced to many Nepali dishes – everything from momo andchatamari to beaten rice and buff sukuti. The food alsoisn't as spicy as I initially expected and I would love to learn how to cook Nepali food.

My most notable observation in Nepal is how so many people made an effort to welcome me to their country and everyone is extremely friendly. New friends, hotel staff, colleagues and even random people on the street were very willing to offer me useful advice, explain cultural norms or provide me with directions. Within my first week I had moreinvitations to dinner than I could have imagined and this openness put me at ease as I began to know this wonderful country.

*Jessica Mirabella is currently volunteering in Kathmandu. To read more about her experiences in Nepal visit KathmanDoings.blogspot.com.*

# 'खुशी' र 'दुःखी' एकैचोटी



**शिवभक्त थापा नेपालको घर पोखरा हो । अहिले उहाँको परिवार पर्सामा बस्छ । नेपालमा रहँदा उहाँ टुरिष्ट गाइडको काम गर्नुहुन्थ्यो । ५ महिना अघि उहाँ पहिलोपटक अमेरिका पुग्नुभएको हो । उहाँ पुगको पहिलो अमेरिकी राज्य न्युयोर्क र पहिलो शहर बफेल्लो हो । हाल उहाँ हार्टफोर्ड, सिटीमा बस्नुहुन्छ । अमेरिकामा पहिलो दिन बारे उहाँ यसो लेख्नुहुन्छ :**

अमेरिका मेरो लागि हरदम अवसरहरुको धर्ती रह्यो । उनीहरुले पनि त्यही भने र मेरो विश्वास पनि त्यहि नै भयो । टुरिष्ट गाइडकै रुपमा म अमेरिका पुगें जसरी म अहिलेसम्म थुप्रै युरोपेली र एशियाली देशहरु पुगेको छु । अमेरिका पुगेपछि मेरो पहिलो नजरको शहर बन्यो बफेल्लो । तर त्यो शहर मैले सोचेको जस्तो अमेरिका भए जस्तो लागेन । तर केही छिन पछिको म्यानहेटनको दृश्यले भने मेरो होस उडायो । रोमञ्चकताको सिमा रहेन । जता हेरे पनि सुन्दरता । वरिपरीका घर, मान्छेहरुको भीड, पानी अनि आकाश, सबै । त्यसले मलाई वास्तविक अमेरिकी स्वाद दियो ।

म्यानहेटनबाट आधाघण्टामा पुगिने ज्याक्सन हाइटले मलाई सांस्कृतिक मिठास चखायो । त्यहाँ गएर मैले मिनी नेपाल वा भारतका केही शहरहरुको प्रतिमुर्ति देख्न पाउँछु जस्तो लागेकै थिएन । अनि त्यहाँ गएर मैले भारतीय, बंगलादेशी, पाकिस्तानी र नेपाली नामहरु भेटें । शाहरुख खानले गरेको घडीको विज्ञापनको पोष्टर देख्दा नेपाल या भारततीरै भएको जस्तो लाग्यो । सारी पसल, मःम पसल, चिया लगायतका चीजहरुले मलाई भावनात्मक रुपमा घरै फर्काएजस्तो लाग्दैथियो । म पलपल अचम्मित थिएँ ।

म्यानहेटनमा भएको बेला, एकजना चोरले नजिकैको पसल चोर्ने प्रयास गरिरहेको देखें । छैउमै उभिएको प्रहरीसंग उ नडराएको जस्तै देखिन्थ्यो । झट्ट नेपालको सम्झना आयो । यस्तो दृश्यहरु नेपालमा पनि थुप्रै देखिने भएका हाँसो फुटिहाल्यो । तर अमेरिकामा प्रहरीले दिनरात काम गरेको देख्दा चाहीं नेपालभन्दा फरक भएको पाएँ । जुनसुकै बेला जहाँ पनि प्रहरी देखिनुले कतै कतै सुरक्षित छु भन्ने महसुस हुँदो रैछ । अमेरिकाका प्रहरीहरु आफ्नो काम प्रति बढी नै संवेदनशील हुँदा रहेछन् ।

अमेरिकाको पहिलो दिनमै मैले धेरै कुरा देखें र धेरै वास्तविकता बुझ्ने मौका पाएँ । अमेरिका धेरै जनाको लागि सपनाको शहर हो । यो ठाउँ इमान्दार र कर्तव्यनिष्ठहरुका लागि अवसरको भकारी रैछ भन्ने महसुस भयो । पहिलो दिनमै मैले कामको सुरुवात त गरेको थिइन तर मैले मनमनै सोचिसकेको थिएँ यहाँ म एउटा कर्तव्यनिष्ठ व्यक्ति चाहीं बन्नेछु ।

पहिलो दिनमै मैले आफ्नो परिवार र साथीहरुलाई मिस गर्न भ्याएँ । धेरै खुशीको क्षणमा पनि त्यो खुशी बाँड्न आफन्त साथमा हुनुपर्छ भन्थे, हो रैछ । नेपालमा रहँदा साथीभाई, परिवारसंगै चाडपर्व मनाएको, घुम्न गएको झल्झली याद आयो तर यहाँ मसंग अन्जान साथीहरु मात्र थिए । अरुले काम गरिरहेको र दुख गरिरहेको देख्दा यहाँ आफ्नो भविष्य सोचें । त्यति बेला मैले मेरा आफन्त, परिवार र साथीहरुलाई कति मिस गरुँला भन्ने पनि आँकल्न थालें । भक्कानिउँला जस्तो भयो । तर सम्हालिएर सुखको पहिलो दिन बिताउन तल्लीन रहें । दिन घुमघाम मै वित्यो, पहिलो पटक अमेरिकी तरिकाले अमेरिकीहरुको अगाडी खाजा खाएँ, बेलुकी चाहीं नेपाली दाल भात नै जुर्यो । सुत्ने बेलामा फेरि नेपाल सम्झिएँ । नेपालमा हुँदा ओछ्यानबाट अमेरिकाको बारेमा सोचेको कुरा अहिले पुरा भएको देखेर खुशी हुँदै, ओछ्यानमा गुटमुटिएँ । दिमागमा भोलिको टाइम टेबल थियो, निदाएछु । अमेरिकामा मेरो पहिलो दिन । आशा, अपेक्षाको पहाड अनि केही यथार्थको मनन । साँच्चै नयाँ अनुभव । त्यही दिनको आँटले मलाई अहिलेसम्म खुशी राखिरहेको छ ।

# फेसबुक र ट्वीटर भर्सेज






## भट्टी र चिया पसल

शहरमा बाटा धेरै छन् अझ बाटो भन्दा गाडी बढि छन् । शहरमा घर बढि छन् र घर भन्दा मान्छे धेरै छन् । मल छन्, पार्क छन्, सिनेमा घर छन् अनि छन् धेरै खाजा घरहरु तर तुलनात्मक रुपमा अझै गल्लीका भट्टी र चिया पसल बढि छन् ।

मल, पार्क अनि भवनहरुले त के देखे र के सिकाए भन्न मुश्किलै छ ? तर प्रष्टै थाहा छ भट्टी अनि चिया पसलले के देखे र के सिकाए भनेर । हरेक परिवर्तनलाई आफ्नै नजरले हेरेको छ चिया पसल अनि भट्टी पसलले । यहाँ भट्टी पसल र चिया दोकानमा देश बन्छ अनि बिग्रन्छ । अघिल्लो दिन खराब भोलिपल्ट सप्रन्छ । अनेकौं योजनाहरु बन्छन् अनि तुहिन्छन् पनि । हरेक कार्यको योजना अनि तर्जुमा गर्न सक्छन् ती ठाउँ ।

बिडम्बना आजकल ती ठाउँहरुमा युवा पुस्ता कमै देखिन्छन् । लाग्न सक्छ युवापुस्ता सप्रिए, सबै एकजुट भएर देश र समाज विकासका लागी अगाडी बढ्दैछन् । र त उनीहरुलाई चिया पीउन अनि भट्टीमा जुट्न समय छैन । यदि यहि सोच हो भने तपाईं गलत हुनुहुन्छ । आजकल युवाहरुले समाज र देश विकासको निम्ती चिया पसल र भट्टी छोडेर नयाँ ठाउँ सिर्जना गरेका छन् । आजकल युवाहरु फेसबुक र ट्वीटरमा देश हाँकिरहेका हुन्छन् । समाज परिवर्तन गरिरहेका हुन्छन् । बिना मेहेनत ,बिना पसिना अनि बिना बाधा अवरोध ।

घरमै बसी बसी कल्पनाको सागरमा उड्छन्, गुड्छन् अनि पौडन्छन् । भयंकर चिन्ता छ उनीहरुलाई साना साना बेथिती अनि कुरीतीहरु प्रती । घटनाहरु घट्नै हुन्न, बग्रेल्ती पीर र चिन्ताहरु रगमगाईरहेका हुन्छन् फेसबुक र ट्वीटरको अनुहारभरि ।

लाग्छ हामी संसारकै सबैभन्दा बढि माया गर्छौं मातृभुमीलाई । चोकमा फोहोर भयो हामी तत्कालै फोटो खिचेर फेसबुकको अनुहारमा टाँस्छौं अनि ट्वीटरमा झुन्डाउँछौं । कसै प्रति अन्याय भयो हामी आवाज उठाउँछौं तीनै ट्वीटर र फेसबुकमा । हाम्रा हात कुनै विकृती तर्फ उठ्दैन उठे पनि फेटु मार्फतै हो ।

हरेक कुराको सकारात्मक र नकारात्मक दुवै पक्ष हुन्छ नै । आशा गरौं भविष्यमा एकदिन यस्तो दिन आउनेछ जहाँ आवाज उठाउनेले मात्रै हैन सुन्न पर्नेले पनि फेसबुक र ट्वीटरबाटै सुन्नेछन् । तर के भन्न सकिन्छ र ? चिया र भट्टीको ठाउँ फेसबुक र ट्वीटरले लिए जस्तै अर्कै केहि जन्मिन्छ की ?

## ट्वाईलेट महात्म्य

बरु नखाएर केहि दिन बाँच्न सकिन्छ तर बिसर्जन बिना बाँच्न सकिन्न । खाने ठाउँहरु प्रशस्त भएको शहरमा विसर्जन गर्ने ठाउँको अभावै अभाव छ । भएका केहि सार्वजनिक शौचालयहरुमा पनि प्रयोग पछिको शुल्कले भुतुक्कै बनाउँछ । छोटो र लामो शौचालयको क्रमशः रु ५ र रु १० तिर्न पर्दा बरु खान चाहिँ नियन्त्रण गर्नु पर्छ कि भन्ने मनमा लागीरहन्छ । भाग्यबस शौचालय सफा भए त ठिकै छ तर गन्हाएर नाकको रोग लाग्ला भन्ने त्राहिमाम ।

हामी सबैलाई कुनै न कुनै समयमा शौचालयको समस्या भएको नै हुनुपर्छ । कसैको कपडामा फुस्केको होला, कसैले लाजै नमानी कुना पसेर वा छेउ लागेर निप्ट्याउनु भएको होला, कसैले त मिनरल वाटरको बोटल नै प्रयोग गर्नुभएको होला । अरुबेला कहिले नभेट्ने नसोध्ने साथीको पसल वा कोठामा पनि पुग्नु भएकै होला । हो लाज शरम डर सबैलाई हराउँदो रहेछ बिसर्जनले ।

धेरै ठाउँमा त शौचालयको यति अभाव छ कि गारो पर्दा दरै उपाय लगाउन पर्छ । जानेका र चलेका केहि उपायहरुको चर्चा गर्दैछु :

१) जुन भेटिन्छ त्यही घरको ढोकाबाट लुसुक्क छिर्ने अनि भऱ्याङमुनिको ढोकाको छेउमा गएर नाक थाप्ने गन्धले थाहा भईहाल्छ शौचालय हो की होईन भनेर । हो रहेछ भने काम सक्ने । कसैले सोध्दैन तपाईं को हो भनेर ? पल्लो कोठाकोले ठान्छ वल्लोको मान्छे भनेर अनि माथ्लो कोठाकोले ठान्छ तल्लोको मान्छे भनेर । हैन रहेछ त के भो अर्को घरमा प्रयास गर्नुस ।

२) कुनै कार्यालयमा छिर्नुस नक्कली सेवा प्रयोगकर्ता वा सोधपुछको लागी । एकछिन दायाँबायाँ कुरा गर्नुस कुराकानीकै क्रममा सुक्ष्म निरिक्षण गरेर शौचालय खोज्नुस अनि एकछिन भन्ने अनुमति मागेर काम निप्ट्याउनुस ।

३) एउटा होटल वा लजमा जानुस अनि कोठा हेर्ने निहुँ पारेर हल्का हुनुस् अनि फर्कनुस् । एकछिनमा आउँछु भनेर गफ दिनुस भइहाल्छ ।

४) सबभन्दा सजिलो उपाय भनेको नजिकै सरकारी कार्यालय वा कलेजहरु कता छन् हेर्नुहोस । चुपचाप लागेर पस्नुस फोहोर र अँधेरो कुना जता छ यसो हेरेर नाक थुन्दै हल्का हुनुस् ।

५) तपाईंमा लाज शरमको अभाव छ भने एउटा छेउ लागेर निप्ट्याउनुस । केहि फरक पर्दैन हाम्रोमा गर्नेलाई भन्दा हेर्नेलाई लाज हुन्छ अतः लाज लाग्नेहरु तर्केर हिँड्छन् । **अस्तु**



# Indian Taj

AUTHENTIC INDIAN CUISINE

VEGETARIAN NON VEGETARIAN
& SEAFOOD RESTAURANT
CATERING FOR ALL OCCASIONS

37-25 74th Street,Jackson Height, NY 11372

Tel: 718-651-4187



# LAMAACCOUNTING®

Accounting for Business



**Namgel Lama**
Founder

Tel:718-505-2095
Fax:718-505-2096

## Our Services

Tax Services

☒Personal Tax Preparation
☒Business Tax Preparation
☒Payroll Tax and 941 Filing
☒Sales Tax Filing

Start up Services

☒Bookkeeping
☒Payroll Tax and 941 Filing
☒Licenses & Permits
☒Set up New Business
☒Tax Planning
☒Financial Consultations

74-09 37th Ave,suite 407
Jackson Height, NY 11372

nlama@lamaaccounting.com
www.lamaaccounting.com

# Hello Page 

| | | | |
|---|---|---|---|
| Everest Hair Salon | 74-17 37th Avenue, Jackson Heights,NY11372 | 718-424-5956 | everesthairsalon@gmail.com |
| Mustang Thakali Kitchen | 74-14 37th Avenue, Jackson Heights, NY 11372 | 718-898-5088 | |
| Indian Taj | 37-25 74th Street, Jackson Heights, NY 11372 | 718-651-4187 | |
| Lama Accounting | 74-09 37th Avenue, Jackson Heights, NY 11372 | 718-505-2095 | www.lamaaccounting.com<br>nlama@lamaaacounting.com |
| Malingo Restaurant & Bar | 43-16 Queens Blvd, Sunnyside, NY 11104 | 347-808-8100 | www.malingousa.com<br>malingorestaurant@gmail.com |
| Dosa Delight | 35-66 73rd Street, Jackson Heights, NY 11372 | 718-397-1000 | www.facebook.com/dosadelight |
| Delhi Heights | 37-66 74th Street, Jackson Heights, NY 11372 | 718-507-1111 | |
| Patel Brothers | 1009 W. Rochelle Road, Irving, TX 75062<br>6205 Coit Road, Suite 201, Plano, TX 75024 | 972-570-2504<br>972-398-1166 | www.patelbrothersirving.com |
| Kim Chiropractic | 5453 N. MacArthur Blvd Irving, TX 75038 | 469-685-8918 | |
| Melody Salon | 3561 N. Beltline Rd, Irving, TX 75062 | 817-793-4113/469-487-8775 | |
| Law Offices of Patrick Wright | 10888 Shady Trail, Dallas, TX 75220 | (214) 745-1080 | www.wrightfirm.com |
| Nepa Auto Repair | 307 N Rogers Rd #100, Irving, TX 75061 | (972) 253-8888 | www.nepaautvorepair.com |
| Nepa Insurance | 307 N Rogers Rd #100, Irving, TX 75061 | 972-232-9605 | |
| India Import Supermarket | 2521 W Airport Fwy, Irving, TX 75062 | 972-255-5941 | www.indiaimportsupermarkets.com |
| Basmati Grill | 2427 W Airport Fwy, Irving, TX 75062 | 469-261-4852 | www.facebook.com/BasmatiGrill |
| Texas Insurance Advisors | 3585 N Beltline Rd, Irving, TX 75062 | 972-256-1800 | www.mytexasagent.com |
| Laxmi Jewelers | 2521 W Airport Fwy, Irving, TX 75062 | 214-441-0091 | www.laxmi22k.com |

# सडक दुरदर्शी पथ



भनिन्छ, अमेरिकामा सबै हतारमा हुन्छन् । अनि जो हतारमा छैन उसको अमेरिकामा केही काम छैन । चलायमान शहर अनि गतियुक्त सडकयात्रा । झट्ट हेर्दा, यही नै हो अमेरिकाको प्रमुख विशेषता । तर यो सडकको इतिहास ६० वर्ष अघिबाट मात्रै स्वर्ण बन्दै गएको हो । संयुक्त राज्य अमेरिकाका ३४ औं राष्ट्रपति ड्वीट आइसिनहोवरले १९५६ मा फेडेरल हाइवे एक्ट जारी गरे । नियम सजिलो र सशक्त भएपछि २०१० सम्ममा अमेरिकामा राजमार्गको लम्बाई करिब ७६ हजार किलोमिटर पुगेको छ । ५० वर्षमै अमेरिका विश्वको दोश्रो लामो सडक संजाल भएको देश बनेको छ । पहिलो नम्बरमा रहेको चीनमा ८२ हजार किलोमिटर राजमार्ग छ ।

**नयाँ स्वाद चाख्दै नेपाली**

नेपालमा मुस्किलले ७० किलोमिटर प्रतिघण्टाको गतिमा गाडी चलाउनेहरु अमेरिकामा पुगेपछि १ सय ३० किलोमिटर प्रतिघण्टासम्मको अनौठो स्वाद चाख्न पाउँछन् । पोखराका मोहन बराल ३ वर्षदेखि न्युयोर्कमा बस्छन् । उनले नेपालमा गाडी कुदाउँदा एउटा स्पिड बढीमा १० मिनेटसम्म चलेको अनुभव गरेका छन् । तर अमेरिकाको सडकमा निरन्तर ५ घण्टासम्म तीब्र गतिमा गाडी चलाउँदा उनलाई अचम्मै लाग्थ्यो । मुस्काउँदै भन्छन्, “यत्तिको यात्रा गर्न पाए त म १ घण्टामै काठमाडौंबाट पोखरा पुग्थें होला ।” उनीसंग अमेरिकाको सडकबाट ७ घण्टा लगाएर क्यानडासम्म पुगेको अनुभव छ ।

**अमेरिकी सडक र अर्थको सम्बन्ध**

१५ ट्रिलियन डलर कुल ग्राहस्थ उत्पादन रहेको अमेरिकालाई आर्थिक सम्पन्नताको बाटोमा पुऱ्याउने काम पनि सडकले नै गरेको हो । ४२५

> नेपालमा मुस्किलले ७० किलोमिटर प्रतिघण्टाको गतिमा गाडी चलाउनेहरु अमेरिकामा पुगेपछि १ सय ३० किलोमिटर प्रतिघण्टासम्मको अनौठो स्वाद चाख्न पाउछन् । पोखराका मोहन बराल ३ वर्षदेखि न्युयोर्कमा बस्छन् । उनले नेपालमा गाडी कुदाउदा एउटा स्पिड बढीमा १० मिनेटसम्म चलेको अनुभव गरेका छन् । तर अमेरिकाको सडकमा निरन्तर ५ घण्टासम्म तीब्र गतिमा गाडी चलाउदा उनलाई अचम्मै लाग्थ्यो ।

बिलियन डलरको खर्चमा बनेको अहिलेसम्मको सडक निर्माण योजना अमेरिकी इतिहासमा पिरामिड पछिको सबैभन्दा ठूलो निर्माण योजना पनि हो । यसले हजारौं नागरिकलाई रोजगारी दियो, अनि लाखौंलाई हिंड्ने र दौडिने बाटो ।

नेपालमा बनेका बाटोको वर्षेनी मर्मत खर्च बढिरहेका बेला अमेरिकाको सडक निर्माण योजनाको सिको गर्न सक्ने हो भने त्यही बाटोबाट उठ्ने कर, अनि त्यसले उत्पादन गर्ने रोजगारीको अवसरले नेपाललाई पनि केही आर्थिक सबलता तर्फ लैजान सक्छ ।

# सडक फैलिंदो विस्तारले उब्जाएको सपना




५ वर्ष अघिसम्म भक्तपुर लोकन्थलीका विजय बस्नेत काठमाडौं आउनु पर्‍यो भने, लोकन्थलीबाट सातदोबाटो निस्कने बाटो प्रयोग गर्थे । उनको टोलबाटै जान्थ्यो, लोकन्थलीलाई कोटेश्वर जोड्ने सडक, तर त्यो बाटो सँधै उनको दोश्रो प्राथमिकतामा पर्थ्यो, सार्वजनिक विदाको दिन बाहेक । विजय भन्छन्, "यहाँबाट कोटेश्वर पुग्न कम्तीमा १ घण्टा छुट्याउनु पर्थ्यो । सँधै जाम हुने ! त्यसकारण पनि अर्को बाटो जान्थें । बढीमा ४० मिनेटमा त पुगिन्थ्यो ।"

तर अहिले स्थिती फेरिएको छ । उनै विजयको टोल अगाडीको बाटो अहिले उनी लगायत धेरैको पहिलो प्राथमिकतामा पर्छ । ६ लेन चौडा सडकले एक त ठाउँ नै अन्तराष्ट्रिय स्तरको देखिएको छ, अनि त्यसमाथि पुरै सडक जाममुक्त । "अहिले बढीमा ७ मिनेट लाग्छ कोटेश्वर पुग्न ।" विजयको खुशी बोल्छ ।

जापान सरकारको सहयोगमा निर्माण भएको ६ लेनको कोटेश्वर-भक्तपुर सडक अहिले धेरैलाई प्रफुल्लित पार्ने स्थान भएको छ । काठमाडौंको भीड, ठेलमठेल गाडी र मान्छे, जहिलेसुकै जामै जाम । तर त्यही मान्छे कोटेश्वर कट्यो भने उसको मुखबाट निस्कने पहिलो वाक्य हो, "आहा सबै बाटो यस्तै भैदिए कस्तो हुन्थ्यो होला ? कहिले बन्ला ?"

जापान सरकारको सहयोगमा निर्माण भएको ६ लेनको कोटेश्वर-भक्तपुर सडक अहिले धेरैलाई प्रफुल्लित पार्ने स्थान भएको छ । काठमाडौंको भीड ठेलमठेल गाडी र मान्छे, जहिलेसुकै जामै जाम । तर त्यही मान्छे कोटेश्वर कट्यो भने उसको मुखबाट निस्कने पहिलो वाक्य हो, "आहा सबै बाटो यस्तै भैदिए कस्तो हुन्थ्यो होला ? कहिले बन्ला ?"

**योजनाहीन सडक विस्तार**

साँघुरो सडकबाट वाक्क बनेका राजधानी काठमाडौंबासीलाई ६ लेन सडकको आनन्द प्रदान गर्ने भन्दै बाबुराम भट्टराई नेतृत्वको सरकारले प्रमुख तथा शाखा सडक चौडा गर्ने अभियान चलाएको १ वर्ष भयो । पहिलो चरणमा बाटोलाई मिचेर बनाएका घर भत्काइएका छन्, अनि





नेपालमा बाटोको गुणस्तर चौडाई आवश्यकता जति नभएका कारण बढी दुर्घटना हुने ट्राफिक प्रहरी र सवारी व्यवस्थापकहरुको भनाई थियो केही अघिसम्म । तर एउटा अचम्मलाग्दो तथ्यले त्यो अनुमानलाई झुठो सावित गरिदिएको छ । जब बाटो राम्रो, चौडा र गुणस्तरीय हुँदै जान्छ, त्यहाँ दुर्घटना पनि बढी हुन्छ । यो ६ लेन सडकले निर्माण सकिएको ३ वर्षमा मात्रै करिब १ सय १० जनाको ज्यान लिइसकेको छ । वर्षमा सरदर ३ सयका दरका भएका साना ठुला दुर्घटनाबाट घाइते भएका २ सय जना सँधैका लागि अशक्त बनेको ट्राफिक प्रहरी महाशाखाको तथ्यांक छ ।

बाटो चौडा पार्न निर्माण सामग्री थुपारिएका छन् । तर जुन गतिमा बाटा भत्किए, त्यसको धेरै कम गतिमा ती बाटोहरुको पुनर्निमाण भए । शान्तिनगर, पुल्चोक, सामाखुशी लगायतका ठाउँमा अस्थिपञ्चर घरहरु ठडिएको पनि १ वर्ष पुग्न लाग्यो । सरकारको नियमलाई अटेर गरेर बाटो नै मिची घर बनाउनेहरु त तर्सिए तर बाटो हिंड्ने मान्छेहरु अझै सहज पैदल यात्रा गर्न सक्दैनन् । सानो विग्रेको बाटो, त्यसैमा गाडी आयो भने त अर्काको घरभित्रै छिर्नुपर्ने । ट्राफिक प्रहरी प्रमुख गणेश राई भन्छन्, "बाटो साघुरो थियो । चौडा बनाउने काम भएको हो । तर निर्माण सकिएको छैन । हामीले पनि छिट्टै बनाउन सुझाव दिएका छौं ।"

अहिले भत्काइका बाटोहरुका कारण काठमाडौं धुलोमय भएको छ । धुलोका कारण हुने संक्रमणहरुमा बृद्धि भएको छ । बाटो भत्काउँदा पानीको पाइप समेत फुटेर त्यसको फोहरले समेत विभिन्न संक्रमण फैलिएका छन् । आँखा अस्पताल, त्रिपुरेश्वरका अनुसार, दैनिक १० जना जति विरामी कन्जक्टिभाइटिस (आँखा पाक्ने रोग) का विरामी आउँछन् । अन्य अस्पतालमा फोक्सोका विरामी, भाइरल, रुघाखोकीका विरामीहरुको संख्या पनि ह्वात्तै बढेको छ ।

**हाम्रो चाहना सडक विस्तार नै हो या ........?**

सडक दुर्घटनाबाट हुने मृत्युको हिसाबले नेपाल एशियाकै पहिलो देश हो । कुनै बेला सडक दुर्घटनाका कारण सबैभन्दा धेरै ज्यान जानेहरुको सुचीमा रहेको भारतले अहिले निर्माण गरेका बाटोहरु र त्यसको प्रयोगका लागि जनमानसमा फैलाइएको सचेतनाका कारण दुर्घटनामा कमी आएको छ । तर नेपालमा भने दैनिक करिब १ सय वटा साना ठुला दुर्घटना हुने र कम्तीमा ५ जनाको ज्यान जाने गरेको तथ्यांक छ ।

नेपालमा बाटोको गुणस्तर, चौडाई आवश्यकता जति नभएका कारण बढी दुर्घटना हुने ट्राफिक प्रहरी र सवारी व्यवस्थापकहरुको भनाई थियो केही अघिसम्म । तर एउटा अचम्मलाग्दो तथ्यले त्यो अनुमानलाई झुठो सावित गरिदिएको छ । जब बाटो राम्रो, चौडा र गुणस्तरीय हुँदै जान्छ, त्यहाँ दुर्घटना पनि बढी हुन्छ । यो ६ लेन सडकले निर्माण सकिएको ३ वर्षमा मात्रै करिब १ सय १० जनाको ज्यान लिइसकेको छ । वर्षमा सरदर ३ सयका दरका भएका साना ठुला दुर्घटनाबाट घाइते भएका २ सय जना सँधैका लागि अशक्त बनेको ट्राफिक प्रहरी महाशाखाको तथ्यांक छ ।

सडक विभागका निर्देशक तथा सडक दुर्घटना विषयमा अध्ययन गरेका रामप्रसाद पौडेल भन्छन्, "सडक दुर्घटनाको प्रमुख कारण सवारी चालक नै हुन्छ । असिमित गति, मादक पदार्थ सेवन, अनियन्त्रित ओभरटेक लगायतका कारण नै बढी दुर्घटना भएका हुन्छन् ।" स्वीडेनमा सडक दुर्घटनाबारे अध्ययन गरेका पौडेल ६ लेन सडकलाई गुणस्तरीयका साथै मर्यादित र नियमसंगत बनाउन सके, अन्तराष्ट्रिय स्तर कायम रहने विश्वास व्यक्त गर्छन् ।

# संकटमा 'धरहरा' शान

सुन्धारा काठमाडौंको मुटुमा छ अनि सुन्धाराको मुटुमा धरहरा । अग्लो र सेतो ९ तल्ले घर धरहरा विक्रम सम्बत् १८८२ मा महारानी ललित त्रिपुरा सुन्दरीदेवीको नाममा निर्माण गरिएको थियो । नेपालका प्रथम प्रधानमन्त्री भीमसेन थापाले बनाएको भएकाले पनि यसको अर्को नाम भीमसेन स्तम्भ बन्यो । अग्लो ठाउँमा पुगेर शहर र शहरबासीलाई हेर्नका लागि धरहराको निर्माण गरिएको थियो । सैनिक तथा केही प्रशासनिक सुचना र जानकारी दिन तथा भेला गराउन त्यतिबेला धरहराको टुप्पोबाट बिगुल बजाउने गरिन्थ्यो जुन अहिले पनि कहिलेकाहीं गरिन्छ । विक्रम सम्बत १९९० सालको महाभुकम्पले धरहराको २ तल्ला भत्कायो । तत्कालीन प्रधानमन्त्री जुद्ध शम्शेरले सातौं तल्लामा बार्दली राखेर ९ तल्लाकै धरहरा पुनर्निर्माण गरे । धरहराको हालको उचाई २०३ फिट छ । धरहराको भित्र २१३ र बाहिर २५ सिंढी छन् । १८८ वटा सिंढी उक्लेपछि आउने बार्दलीबाट काठमाडौं नियाल्न पाइन्छ । धरहराको सबैभन्दा माथिल्लो तल्लामा शिवलिंग छ ।

धरहरालाई मुगल शैलीमा बनाइएको छ । भनिन्छ धरहराको निर्माण सुर्की चुना, मास र चाकुको मिश्रण अर्थात् बजबाट गरिएको हो । वरिपरी पर्खाल भएको धरहरालाई हिन्दु, मुस्लिम र क्रिश्चियन सबै धर्मको सहिष्णुताको प्रतीक मानिन्छ ।

तर काठमाडौंमा अहिले धरहरा सबैभन्दा अग्लो घर रहेन । धरहराकै वरपरका गगनचुम्बी महलका कारण धरहरा एउटा इतिहास बनेको छ । त्यहाँबाट काठमाडौं हेर्ने हो भने वरपरका घरलै नै सबै छेकिदिन्छन् । वर्षेनी बन्ने ४ हजार जति घरहरु नै देखिन्छन् वरिपरी । पहिले सामाजिक, पुरातात्विक केन्द्र बनेको धरहरामा अहिले अर्को महत्व थपिएको छ, प्रेमालाप केन्द्र । तर धरहराको महत्व घट्न नदिन यसको सुरक्षा, बेला बेलामा गरिने मर्मतलाई थप प्रगाढ बनाउनु पर्ने हुन्छ । नत्र धरहरा, अग्ला घरहरुको बीचमा हराउन बेर लाउँदैन ।



# ममताको शक्ति

# पुष्पा बस्नेत






**२९वर्षीय पुष्पा बस्नेत २० जनाजति बालबालिकाकी 'पुष्पामामु' हुन् । उनले भर्खरै सिएनएन हिरो २०१२ को अवार्ड जितेकी छन् ।**

महाराजगञ्ज स्थित बालगृहमा एउटी चार वर्षकी फुच्चीले एक दिनभनी, 'म त ठूलो भएपछि ममी बन्ने ।' डाक्टर नपाइलट, ठूलो मान्छे न सफल मान्छे; त्यो सानी केटीमा 'ममी' बन्ने सपना कसरी टुसायो ? म एकछिन साचे मा डुबें ।

मनका पत्र केलाउँदै जाँदा मभित्र व्याप्त एउटा सवंदेना भटें जसले म र दुई देखि १२ वर्षका ती १९ जना केटाकेटीलाइ बाँधिरहको थियो । त्यो संवेदना थियो, ममताको संवेदना ।

सायद उनीहरूले मैले जस्तै बुझ्न थालेका थिए ममताको अर्थ ! डाक्टरको ज्ञानले एउटा घाउ या रोग निको पार्ला, पाइलटको सीपले केही माइल उडाउला, तर एउटी आमाको ममताले सन्तानको पूरै जिन्दगीलाई चाहेअनुसारको आकार दिन सक्छ । त्यसैले म स्नेह र ममताको शक्तिमा विश्वास गर्छु ।

यी बालबालिकाहरूसँग मेरो ममत्वको संवेदना जोडिनुमा मात्र एकपलको करामत छ । कलेजको फिल्ड वर्कको सिलसिलामा कालीमाटीको प्रहरी महिला सेलमा जाँदा वर्ष दिनपनि नपुगेकी सानी बच्ची सानुकान्छीले मेरो कुर्ताको फेर तानी । यस्सो फर्कें हेर्दा झट्ट, 'आब्बुई जेलमा पनि बच्चा !' भन्नपुगेछु । उसका आँखाले मलाई अमूर्त भाषामा भनिरहेजस्तै लाग्यो । मलाई यहाँबाट निकाल, जेलको बन्द हावामा म कसरी हुर्कने ?'

त्यही क्षणको आवेग पछि मैले जेलमा जन्मे हुर्केका १९ जना केटाकेटीहरूलाई गाँस, बास, कपास, पढाइ, राम्रो हुर्कने वातावरण र आफू भित्र पलाउन सकेजति माया र ममता दिइराखेकी छु । सबैले मलाई, 'पुष्पामामु' भनेर बोलाउँछन् । त्यसरी बोलाएको सुनेर कहिलेकाहीँ मान्छेहरू पुलुक्क मेरो मुखमा हेर्छन् । त्यतिबेला मेरो नाक गर्वले गजक्क फुलेको हुन्छ !

म यिनीहरूकी प्रिय 'पुष्पामामु' हुँ तर आफ्नै आमा हैन । राम्रो पढ्न, लेख्न र स्वतन्त्र रूपमा बाँच्न पाएकै आधारमा विभिन्न परिस्थितिवश कैदी हुन पुगेका आफ्ना आमाबाबुहरूबाट केटाकेटी नटाढिऊन् भन्ने मेरो ध्याउन्न हो । हरेक महिना म यिनीहरूलाई आफ्ना आमाबाबुहरूसम्म पुऱ्याइदिन्छु । अरू कोही बच्चा होस्टेलबाट घर पुग्दाको क्षणमा जब यिनीहरूले पनि रमाई-रमाई आफ्ना आमाबाबुलाई अँगालेको देख्दा मेरा आँखा रसाउँछन् । सामाजिक न्यायको कठघरामा उनीहरूले हारेका होलान्, तर ममताको कठघरामा उनीहरूले सँधै जितेका छन् । यदि म आइन्सटाइन हुन्थेँ भने, प्रकाशमात्र हैन आमाको ममता पनि निरपेक्ष हुन्न भन्ने प्रमाणित गर्न खोज्थें होला ।

यी केटाकेटीसंग मैले हरेक दिन १९ आमाको आत्मा बोकेर बसउठ गनुपर्छ, कोहीऔंला चुस्छन्, कोही बाहुलाले सिंगान पुच्छन्, कोही ओच्छ्यानमा मुत्छन् । हरेक केटाकेटीलाई फरक फरक तरिकाले सम्हाल्नुपर्ने, फरक फरक कोणबाट ममता देखाउनुपर्ने ! फेरि ममताको घडा पनि अचम्मकै हुने रहेछ, जति चुहायो उति भरिँदै आउने । यो सबै कुरा लेख्दा मलाई आफ्नी आमाको सम्झना हुन्छ, जसका कारण म आजयहाँ छु । सुख दुःख, सफलता असफलताहरूमा सँधै मलाई आड दिइराख्ने मेरी आमाको ममताको दृष्टान्तले वास्तवमा मलाई यी सबैकी 'पुष्पामामु' बनाएको हो । व्यक्तिगत दानहरूबाट कसोकसो चलिरहेको यो बालगृहको मूलखाँबो त मैरै आमाले धानिरहनुभएको छ । हरक्षण बालगृहमा केटाकेटीहरूसँग रत्तिएपनि हरेक बिहान आमाले पकाएको खानाखान म आफ्नै घर पुगेकी हुन्छु ।

लगाउन खान समस्या नभएकी घरकी प्यारीछोरी भएर पनि धेरै समय म यी केटाकेटीहरूको पालनपोषणका लागि दीर्घकालीन स्रोत कसरी जुटाउने भन्ने सोच्नमै जाने गरेको छ । तर पनि कसोकसो आजसम्म चाहिँ जुटेकै छ । कसैले मलाई भन्थे, "तिमीआफ्नो लागि माग्दा केही नजुट्ला तर अरूको लागि माग्दा भगवान्ले अवश्य जुटाइदिन्छन् ।" सायद ममताको शक्तिकै कारण होला, यो कुरा साँच्चै हो जस्तो लाग्छ । त्यसैले म ममताको शक्तिमाविश्वास गर्छु ।

**श्रोत : मेरो जिन्दगी मेरो विश्वास, एण्टेना फाउण्डेशन नेपाल**

# विद्युत

## उत्पादन

विद्युतउत्पादनको परिमाणको हिसाबले अमेरिका दोश्रो नम्बरमा पर्छ। अमेरिकाले अहिले करिब ४० खर्ब किलोवाट विद्युतउत्पादनगरिरहेको छ । पहिलो नम्बरमा रहेको चीनले ४० खर्ब ६० अर्ब किलोवाट विद्युतउत्पादन गर्छ। नेपालविद्युतउत्पादनको हिसाबले १ सय २४ औं राष्ट्र हो । नेपालमाकरिब ३ अर्ब किलोवाट विद्युतमात्रै उत्पादन हुन्छ ।

## उपयोग

अमेरिकामा ३८ खर्ब किलोवाट विद्युतखपत हुन्छ। खपतको हिसाबले पनि अमेरिकादुई नम्बरमा पर्छ । पहिलो नम्बरमा रहेको चीनले उत्पादन गरेको लगभग पुरै विद्युतखपत गर्छ । यस हिसाबले अमेरिकामाप्रत्येक वर्ष एकजनाव्यक्तिले १२ हजार किलोवाट विद्युतखपत गर्छ। नेपालमावर्षेनी ५ अर्ब विद्युतखपत हुन्छ। एकजना नेपालीको भागमा १ सय ६२ किलोवाट पर्छ।

## आपूर्ति

आफूलाई नपुगेको विद्युतआपूर्ति गर्ने देशहरुमापनिचीन अगाडी छ । ५५ अर्बकिलोवाट विद्युतचीनले विभिन्न देशहरुबाट किन्छ । अमेरिकाचाहीं ३४ अर्ब किलोवाट विद्युतउत्पादन गरेर तेश्रो नम्बरमा छ। १ करोड किलोवाट आपूर्ति गर्ने नेपाल सुचीको ९५ औं नम्बरमा छ।

## निर्यात

विश्वमाजर्मनी सबैभन्दा धेरै विद्युतनिर्यात गर्ने राष्ट्र हो । उसले वर्षेनी ५४ खर्ब किलोवाट विद्युतनिर्यात गर्छ। अमेरिका यो सुचीको नवौं नम्बरमा पर्छ । अमेरिकाले १८ खर्ब किलोवाट विद्युतनिर्यात गर्छ । नेपालले भने ३ वर्षदेखि विद्युतनिर्यात गर्न सकेको छैन ।

तथ्यश्रोत:CIA Factbook, 2012







Electricity - exports (million kWh)




Waiting

| Country | 2000 | 2001 | 2002 | 2003 | 2004 | 2005 | 2006 | 2007 | 2008 | 2009 | 2010 | 2011 | 2012 |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| Nepal | 72 | 68 | 95 | 95 | 95 | 142 | 111 | 101 | 165 | 165 | 0 | 0 | 0 |

Electricity - exports (million kWh)




Waiting

| Country | 2000 | 2001 | 2002 | 2003 | 2004 | 2005 | 2006 | 2007 | 2008 | 2009 | 2010 | 2011 | 2012 |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| United States | 12,772 | 14,000 | 14,829 | 18,170 | 18,170 | 13,360 | 23,970 | 22,900 | 20,140 | 20,140 | 24,080 | 24,080 | 18,110 |

Electricity - imports (million kWh)




Waiting

| Country | 2000 | 2001 | 2002 | 2003 | 2004 | 2005 | 2006 | 2007 | 2008 | 2009 | 2010 | 2011 | 2012 |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| Nepal | 196 | 210 | 174 | 227 | 227 | 237 | 241 | 266 | 380 | 560 | 213 | 213 | 70 |

Electricity - imports (million kWh)




Waiting

| Country | 2000 | 2001 | 2002 | 2003 | 2004 | 2005 | 2006 | 2007 | 2008 | 2009 | 2010 | 2011 | 2012 |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| United States | 39,513 | 43,000 | 48,879 | 38,480 | 38,480 | 36,230 | 30,390 | 34,210 | 51,400 | 51,400 | 57,020 | 57,020 | 34,320 |

# मनमोहक

# रारा

शब्द/तस्विर : प्रकाश तिमिल्सेना

चारैतिर हरिया पहाडले घेरिएर बसेको ठूलो जल उपत्यका हो रारा । छिनछिनमा रंग फेरिरहने रारा साच्चीकै विष्मयकारी र रहस्यमय लाग्छ । रारा पुग्ने दुइ विकल्प छन् । एउटा नेपालगञ्जबाट मुगुको ताल्चा विमानस्थल हुदै र अर्को जुम्ला हुदै । प्राकृतिक छटाको आनन्द लिन जुम्ला हुदै पैदल यात्रा गर्नु वेश भएपनि सहजताका लागी ताल्चाबाट उपयुक्त हुन्छ । ताल्चा विमानस्थलबाट जंगलैजंगलको बाटो तिन घण्टा उकालो हिडेपछि रारा पुगिन्छ ।

रारा नेपालको सबैभन्दा ठूलो ताल मात्र होइन सम्भवत सबै भन्दा बढि कविता लेखिएको ताल पनि हो । यहा पुग्ने जो कोहिको मनमा पनि कविता फुर्छ शायद । ताल किनारैकिनार सल्लाको जंगल छिचोल्दै यात्रा गर्नु पनि कम्ता रमाइलो हुदैन । राराको किनारै किनार हिड्दा पानीलाइ छोएर आएको हावाको सितल तरंगले काउकुती लागेको अनुभूति हुन्छ । यहाको पानीले दिनमा कैयौपटक रंग फेर्छ ।









रारामा खान बस्नको चिन्ता छैन । किनारैमा डाफे गेष्ट हाउस छ । डबल बेड कोठाको ६ सय रुपैया र खानाको २ सय रुपैया पर्छ । टेन्टमा सुत्न चाहने हो भने त्यो पनि व्यवस्था हुन्छ । रारामा रहेको सेनाको गणले त्यहा पुग्ने पर्यटकलाइ छोटो डुंगा सयर गराइदिन्छन् । डुंगामा चढेर रारामा रमाइरहेका जलहास र अन्य चराचुरुङगीको जलक्रिडा देख्दा रारामा डुबुल्की मार्न मन लाग्छ ।

रारामा रमेपछि पैदल जुम्ला पुगेर नेपालगन्ज हुदै फर्किन पनि सकिन्छ । तर समय कम छ भने पुनः ताल्चा झरेर नेपालगन्ज आउन सकिन्छ । ताल्चा विमानस्थलबाट सिंगल इन्जिन जहाजले नियमित रुपमा नेपालगन्ज उडान गर्छन् । ४० मिनेटको उडानमा नेपालगन्ज पुगिन्छ ।

सडक यातायातले नछोएको मुगुको ताल्चा एकमात्र विमानस्थल हो । तर यहाको हवाइ सेवा भरपर्दो छैन । हावा चल्ने भएकोले ३ वजेपछि उडान हुदैन । जिल्लाका विकट गाउबाट ल्याएका विरामी विमानस्थलमा अलपत्र भेटिन्छन् । मकालु, गोमा र एयर काष्ठमण्डपका सिङगल इन्जिन र नेपाल वायुसेवा तथा तारा एयरका जहाजले आंशिक उडान भर्ने ताल्चा विमानस्थलमा जहाज चढ्न पनि ठूलै संघर्ष गर्नु पर्ने रहेछ ।

# 'युवा भविष्य मात्रै हैन, समुन्नत वर्तमान पनि हुन् ।'



गगन थापा, नेपाली युवाहरुको लागि नौलो नाम होइन । धेरै नेपाली युवा उनका डायहार्ट फ्यान छन् । काँग्रेसका नेता भएपनि उनलाई चाहनेहरुको राजनीतिक ट्याग छैन । जुनसुकै पार्टीका या गैह्रराजनीतिक छवि बोकेका धेरै युवाहरु समेत गगनको व्यक्तित्व, बोल्ने शैली, घुलमिल गर्ने क्षमताको खुलेर प्रशंसा गर्छन् ।

४० वर्ष अघि काठमाडौंमा जन्मेका गगन थापाको पुर्खौली घर सोलुखुम्बु हो । इन्जिनियर बुवा र गृहणी आमाको कोखबाट जन्मेका गगनका अरु दाजुभाईमध्ये ३ जना इन्जिनियर र १ जना डाक्टर छन् । सुरुमा त गगन पनि डाक्टर नै पढ्न चाहन्थे । राजनीतिमा सरिक भएपछि भने उनले त्रिभुवन विश्वविद्यालयबाट ग्रामीण विकासमा स्नातकोत्तरसम्म पढे । गगनले नेपालमा लोकतन्त्रको पूर्ण स्थापना भएपछि भारतको जवाहरलाल नेहरु विश्वविद्यालयबाट विद्यावारिधी गर्ने सोच बनाएका छन् । उनै युथ आइकन गगन थापा हाम्रो पत्रिकाको लागि कुराकानी गर्दैछन् ।

**के गर्दै हुनुहुन्छ आजकल ?**

संविधानसभाको अवसान भएपछि धेरै जसो समय पार्टीको कार्यक्रम र साथीभाई भेटघाटमै बित्छ ।

**नेपाली युवाको प्रमुख विशेषता के हो ?**

नेपाली युवाको यो अभाव र अप्ठेरोको बीचमा पनि खुशी हुनसक्ने, त्यो बीचमा पनि हाँस्न सक्ने, त्यो बीचमा पनि आफ्नो जीवन खुशीसाथ जिउन सक्ने यो सबैभन्दा ठुलो विशेषता हो । अर्को एकदम क्षणमै आक्रोशमा आएपनि क्षमाशीलता र सहनशीलता पनि नेपाली युवाको महत्वपूर्ण विशेषता हो । यसको प्रमाण भनेको यत्रो लामो हिंसा पछाडी, कुनै पनि समाजमा यो स्तरको शान्तिको अनुभुति गर्न सकिदैन । किनकी धेरै युवाहरुले आफ्नो परिवारका सदस्यहरु गुमाएका छन् । तर ती युवाहरुको एकप्रकारको त्यो गुण भएकोले, त्यो उनीहरुको त्यो चरित्रमै त्यो रहेको कारणले गर्दा त्यो सम्भव भएको हो । प्रगतिको भोक पनि उसको विशेषता भित्रै पर्छ । आफ्नो देशबाट बाहिर जान्छन् युवाहरु भन्ने ढंगले हेर्छौं हामी । तर त्यो के कुराले डोऱ्याइरहेको छ भने, मेरो जीवनकालमा म यो भन्दा माथिल्लो स्तरको जीवन जिउन चाहन्छु र यो मलाई अरु कसैले पनि दिंदैन । न राज्यले न परिवारले न भगवानले । मैले आफैले गर्नुपर्छ भनेर नै उनीहरुले यसो गरेका हुन् । अनि नयाँ युगमा थपिएको विशेषता चाहीं अलि कठोर परिश्रम गर्न सक्ने बानी पनि हो । बाहिर काम गर्न गएका युवाहरुका कारण आएको नयाँ कुरा हो यो ।

**अहिले युवाहरुका लागि कत्तिको अनुकुल समय हो ?**

दुईतीरबाटै हेर्नुपर्छ । एउटा एकदमै प्रतिकुल समय हो । खासगरीकन नेपालको यहाँभित्रको युवालाई उपलब्ध अबसरको कुरा गरौं । उसलाई पहिले आवश्यक पर्ने कुरा भनेको रोजगारीको अवसर हो । त्यो कोणबाट हेर्ने हो भने एकदमै प्रतिकुल अवस्था छ । त्यसपछि सहभागीताको अवसर हो । चाहे त्यो कुनै राजनीतिक दलमा काम गरिरहेको होला । चाहे अरु विभिन्न क्षेत्रमा काम गरिरहेको होला । नेपाली समुदाय अझै कन्जर्भेटिभ छ । उमेरको कारणले उसले धेरै विभेद खेप्दै आएको छ ।

तेश्रो कतिपय उनीहरुसंग भएको प्रतिभालाई राज्यले संरक्षण गर्ने कुरा हो । राज्यसंग त्यसको क्षमता छैन । त्यो कुरा पनि उसका लागि प्रतिकुल अवस्था नै भयो ।

अर्को कोणबाट हेर्‍यो भने, केही पनि छैन यहाँ । त्यसकारण सानो कुराले पनि उ चिनिन सक्छ । मरुभुमि जस्तो अवस्था छ । पानीको एकथोपाको पनि ठूलो महत्व हुन्छ । सानो पहलबाट पनि उसले ठुलो परिवर्तन ल्याउन सक्छ । सबै क्षेत्रमा त्यो सम्भावना छ । किनकी धेरै कुरा हामीले शुन्यबाट सुरु गरेको जस्तो छ ।

**विदेश जाने प्रचलन धेरै छ । विदेश जानुपर्छ युवाहरु या हुँदैन ?**

पहिलो कुरा यो कुरालाई रोजाईको आधारले हेर्नु हुँदैन । यो एकदमै मानवीय स्वभाव हो । उसले जीवनमा सकेसम्म परिवर्तन होस्, राम्रो होस् भन्ने कुरा खोज्छ । त्यसैले बसाईसराई हुन्छ । हाम्रा पितापुर्खा पनि त कहाँबाट कहाँ बसाई सरेका छन् । त्यो केही सजिलोको खोजीमा । अवसर, सजिलो र आरामको लागि बसाईसराई गर्नु मानवीय गुण हो । यहाँ रोजगारीको अवसर सिमित भएका बेला त्यो गर्न खोज्ने भयो । सबैभन्दा बढी नेपालीहरु बाहिर गएको किन भने जीवनवृत्ति र रोजगारीसंग जोडिएको कुरा हो । बाहिर जाने कुरालाई निरपेक्ष रुपमा राम्रो नराम्रो भन्दा पनि नेपालको रिसोर्सलाई नेपालभित्रै प्रयोग गर्ने र उनीहरुलाई यही भित्र बसौ बसौं पार्ने के कुरा हुन्छ । बाहिरबाट उनीहरुले जे गुणस्तरीय सीपहरु सिकेर ल्याउँछन्, त्यसलाई कसरी प्रयोग गर्ने भन्ने कुरा महत्वपुर्ण हुन्छ । कहाँनेर देशको विकासमा त्यो कुरा जोड्न सकिन्छ भन्ने कुरामा ध्यान दिनुपर्छ ।

**धेरैजना चाहीं उदाशिनताका कारण विदेश गए भन्ने सुनिन्छ । देशमा केही भएन, राजनीतिक स्थिरता भएन, कमाउन सकिएन त्यसकारण विदेश जाने लागेको या गएको भन्छन् उनीहरु । वातावरण त्यस्तै हो अहिले उनीहरुले बुझ्नेजस्तै ?**

झट्ट हेर्दा राजनीतिक कारण नै प्रमुख देखिन्छ । तर राजनीतिक अनिश्चितता यस्तै थियो, यहाँ रोजगारी पाइरहेको थियो भने सायद चाहीं चाहना त त्यो हुन्थ्यो राजनीति ठिक ढंगमा जाओस् भन्ने कुरा । यहाँ भित्र अवसर उपलब्ध थियो भने सायद त्यतिखेर मानिसहरु यहाँ अडिन्थे । त्यो बेलामा बाहिर जानेभन्दा मान्छेहरु यहीं भित्र अवसरहरु प्रयोग गर्न खोज्दथे । त्यसैले मुख्य कुरा भनेको यहाँ नयाँ अवसरको ढोकाहरु नै खुलेको छैन । करिब करिब ४ लाख मान्छेहरु वर्षेनी श्रमको बजारमा आउँछन् । उनीहरुलाई विभिन्न स्तरको रोजगारी सिर्जना गर्न सक्नुपर्छ यदि उनीहरुलाई खपत गर्ने हो भने । मुस्किलले ४० हजार खपत हुन्छ । निजी क्षेत्रले पनि गर्न सकेको छैन । आर्थिक कुरा पनि तन्दुरुस्त छैन । कोही मान्छेले म उद्योगी बन्छु भन्यो भने धेरै मान्छेहरु सोच्छन नेपाली युवासंग उद्योगी या व्यवसायी बन्ने क्षमता छैन भन्छन् उनीहरु जुन कुरा म पटक्कै मान्दिन । त्यो सीपहरु नभएको हैन । तर त्यो कुरा केसंग जोडिन्छ भने उसलाई भरोसा र आड भएन भने त्यो कुरा सफल नहुने रहेछ । इमोस्नल भएर हामीले राष्ट्रवादी नारा लगाएर नेपालमै बस्नुपर्छ भनेर हुँदैन । त्यो हुने कुरै हैन । हिजो हाम्रा पुर्खाले पनि त बसाईसराई गर्नुभयो नी त अवसरको खोजीमा । त्यसो भए त हामी अहिले यहाँ हुन्नथ्यौं । पहाडबाट अवसरको खोजीमा शहर झर्ने, मधेश झर्ने कुरा हुन्थ्यो । तिनै आमाबुवाका छोराछोरीहरु क्षितिज फराकिलो बनाउन सात समुद्र पारी गएको कुरालाई सकारात्मक ढंगले नै हेर्नु पर्छ ।

**विदेश गएका युवाहरु फर्किए भने उनीहरुको लागि ठाउँ सुरक्षित छ यहाँ ?**

पहिलो कुरा हामीसंग गएको तथ्यांक छ, आएको हामीसंग तथ्यांक नै छैन । ठुलो संख्यामा प्रत्येक दिन खाडी जान्छन् युवाहरु । पहिले नेपालमै अवसर सिर्जना गर्ने भन्ने कुरा एउटा हो । एउटा बाहिर बाट जसले काम गरेर सिकेर, सीप विकास गरेर, पैसा कमाएर देश फर्केका छन्, त्यसलाई नेपालको विकासमा कसरी जोड्ने भन्ने कोणबाट सोच्यो भने मात्रै हामीले कतिपय सन्दर्भमा त्यसको अतिरिक्त फाइदा लिन सक्छौं । उदाहरणको लागि, नेपालमा अहिले वैदेशिक रोजगारी प्रवर्द्धन बोर्ड छ । हामी अर्को बोर्डको कल्पना गरौं, जसले वैदेशिक रोजगारीमा गएर आएका मान्छेले कमाएको पैसा राख्ने । एकजना मान्छेले काम सुरु गर्न पैसाको कमी होला । समान काम गर्न सक्ने युवाहरुलाई एक ठाउँमा ल्याउने, बैंक लगायतका सपोर्टहरु दिलाउने लगायतका काम गर्ने बोर्ड बन्नु आवश्यक छ । न्यूनतम खर्चमै त्यो बोर्ड बन्न सक्छ । हामीसंग त उच्चस्तरीय पढाई गरेका, सीप सिकेका मान्छेहरु छन् नी । उनीहरुको सीपलाई नेपालको हितमा प्रयोग गर्ने बोर्डको कल्पना गर्न सकिंदैन ।

म त्यस्ता साथीहरुसंग भेट गरिरहेको हुन्छु । अस्ति भर्खरै जर्मनीबाट केमेस्ट्रीमा पिएचडी गरेको नेपाली वैज्ञानिक यतै आएको पाएँ । जर्मनीले नै राख्न चाहेको भए पनि उहाँ स्वदेश फर्कनुभयो । अहिले उहाँ यता भौतारिरहनुभएको छ । अमेरिकाबाट सिटी प्लानिंग पढेका साथी फर्केका छन् । कति साथीहरु छन् जो खाडीका देश गएर केही कुरा सिकेर फर्केका छन् । सरकारले थोरै थोरै कुरामा ध्यान पुर्‍याएर पनि त्यो सबै ठिक पार्न सक्छ ।

**विदेशबाट फर्केकाहरुबाट देशले र राज्यले आश गर्न सक्ने ठाउँ के छ ?**

जे कुराहरु बाहिर सिकेको छ, चाहे सीप होला या औपचारिक अध्ययनका विषय होलान् । त्यो बाहिरबाट फर्केर आइसके पछि चाहीं ती आफूले सिकेको कुराहरु नेपालको वृहत्तर विकासमा जोड्न सके त्यो हाम्रो लागि ठूलो पुँजी हुन्छ । हाम्रो साथीहरु नेपालभन्दा राम्रो भएको ठाउँ मै जानुभएको हो । उहाँहरुले त्यहाँ केही अवश्य सिक्नुभएको छ । खाडीको देशमा गएर एकजनाले ८ घण्टा काम गर्छ । १ लाख रुपैयाँ खर्च गर्छ जाने बेलामा । महिनाको १० हजार जति बच्छ । एकजनाको लागि १ लाख केही हैन । तर १ सय जनाको १ लाख एक ठाउँमा राखे १ करोड बन्छ । १ करोड पुँजी पनि ठुलो कुरा हैन । ती प्रत्येक व्यक्तिले दिनको ८ घण्टा काम गर्ने कुरा पनि हाम्रो हातमा हुन्छ । हामी १ सय जनालाई महिनाको १० हजार रुपैयाँ यसरी ल्याउन सक्दैनौं र ? अवश्य सक्छौं । जाने बेलाका साथीहरुले पनि यो सोच्न सकिन्छ । गइसकेका साथीहरुले चाहीं के सोच्नुपर्छ भने उहाँहरुले पठाएको पैसाले यहाँ मान्छेको जीवनस्तर सुधार्ने काम मात्रै भएको छ । पुँजीको रुपमा त्यसको

# मेरो दिनचर्या र मैले चाहेको मेरो दिनचर्या




म हरदम मेरो आदर्श दिनचर्या सोचिरहन्छु । म चाहन्छु म बिहान ५ बजे उठुँ । मैले सोचेजस्तो हुने भए ६ बजेसम्म व्यायाम गर्थे । साढे ६ बजे घर फर्कन्थें । त्यसपछि करिब एक घण्टा म छोरीलाई समय दिन्थें । उसलाई पढाउथें, उसंग खेल्थें । त्यसपछि म करिब १० बजेसम्म पढ्थें । १० बजे पछि मात्रै भेटघाट र राजनीतिक काम सुरु गर्छु । भेटघाटलाई तालिकाबद्ध गर्छु । तालिका मिलाएर राजधानी बाहिर पनि जान्छु । मेरो सबै भेटघाट र राजनीतिक कामहरु म मेरो कार्यालयमा गर्छु । अलि प्रोफेशनल तरिकाले सबै कुरा म्यानेज गर्छु । ५ बजे पछाडी म मेरो नियमित भेटघाटको काम र अपवाद बाहेक सबै कुरा सक्छु । ५ बजिसकेपछि म घर फर्कन्छु । केही समय छोरीसंग बिताउँछु । आफूले गर्नुपर्ने केही सम्पर्कहरु छन् भने, १ घण्टा जति समय साथीभाईसंग बिताउँछु । २ घण्टा जति पढ्छु । त्यही समय मेरो श्रीमती लगायत मेरो परिवारसंग बिताउँछु । केही किताबहरु पढिसकेपछि म सुत्छु भन्ने मेरो आर्दश सोचाई हो ।

तर अहिले सबै तालिका भताभुंग छ । कुनै पनि दिन यस्तो हुन सकेको छैन । हुन त यसको लागि नियमित प्रयास नगरेको हैन । तर पनि मिल्दैन । धेरैजसो व्यायामको समय बिग्रन्छ । किनकी रातको ठेगान हुँदैन, कति ठाउँमा भेटघाटमा बितेको हुन्छ । व्यायाम गर्न गयो भने आएर म पढ्छु, छोरीसंग खेल्छु भनेको समय, घरको गेटबाटै बिग्रन थाल्छ । भित्र छिर्न नपाउँदै यति धेरै साथीहरु आइसक्नुभएको हुन्छ की, त्यो अपेक्षा नगरिएको, तालिका नमिलाइएको भेटघाट हुन्छ । ९ बजेपछि मात्रै या १० बजेपछि मात्रै भेटघाट गर्ने भन्ने मैले तालिका बनाएको हुन्छु । ७ बजेदेखि नै साथीहरु आइसक्नुभएको हुन्छ । त्यो भएपछि मेरो सबै रुटिन बिग्रन्छ । खानपिनको रुटिन, दिउँसोको सबै रुटिन बिग्रन्छ, कतै कार्यक्रम या भेटघाटमा जानुपर्ने हो भने त्यो बिग्रन्छ । बिहानको समयले गर्दा बेलुकासम्मको सबै तालिकाहरु तानतुन भएर बिग्रन्छ । तर यसलाई सुधार्ने पहल गरिरहेको छु ।

प्रयोग भएको छैन । व्यक्तिले मात्रै चाहेर पनि हुँदैन यसमा । सरकारको पनि त्यसमा उचित दृष्टि हुनुपर्छ । त्यसलाई लगानीको सामुहिक शक्ति बनाउन सक्ने हो भने कति राम्रो हुन्थ्यो होला । उपभोग हैन उत्पादनलाई बढावा दिने खालको वातावरण तब बन्थ्यो । त्यो ठुलो कुरा हो ।

**विदेश जान चाहने, गइसकेका, गएर फर्केका, यही बसेका जति युवा छन् उनीहरुका लागि राजनीति आउन सक्ने ठाउँ हो की हैन ?**

म प्रत्येक मान्छे सक्रिय कार्यकर्ता हुनेगरी राजनीति गर्नुपर्छ भनेर पटक्कै भन्दिन । दुईटा कुरामा प्रष्ट हुनुपर्छ । एउटा राजनीतिक कार्यकर्ता हुने र अरु राजनीतिमा सहभागीता जनाउने र सचेत हुने कुरा फरक हुन् । सबै नेता बन्न खोज्दा पनि समस्या आएको हो । त्यो आवश्यक नै छैन । मसंग त्यो प्रतिबद्धता छ भने मात्रै यता आउनुस् । एउटा कुरा के भने, राजनीति गर्नका लागि अर्को पेशा चाहीं भइरहनुपर्छ जीवन चलाउनका लागि पनि । अर्को कुरा चाहीं यो साधना, तपस्या हो, साह्रै गाह्रो बाटो हो । यसमा आउने सबै अप्ठेरो सहन्छु र कम्प्रमाइजमा जान्न भन्ने हो भने मात्रै हो भने मात्रै राजनीति आउनु ठिक हो । हैन भने त त्यो अमुल्य समयको बर्बादी हो । त्यसरी नमिल्दो राजनीति गर्नेहरु त यहाँ टनाटन नै छन् नी किन आउनुपऱ्यो र ?

**युवाहरु नीति निर्माण गर्ने ठाउँमा प्रभाव जमाउन सक्ने खालका छैनन् । क्रान्ति, आन्दोलनको बेला भने सडकमा उनीहरुको ठूलै सहभागीता देखिन्छ । सडक र युवाको मात्रै सम्बन्ध किन प्रगाढ भएको हो ?**

एउटा त हामीले एकदमै ठुलो अपराध गरिरहेका छौं । पार्टीहरुले युवा दस्ताहरु बनाउँछन् । पहिले देखि नै समस्याहरु थिए । त्यसलाई संस्थागत गराइयो । पहिले अभ्यासमा मात्रै समस्या थियो । पार्टीको हितका निम्ति मात्रै उनीहरुलाइ संगठित गर्नु भनेको अपराध नै हो । त्यसका विरुद्ध हामीले आवाज उठाउनुपर्ने ठाउँमा हामी कस्तो भयौं भने हामीले त्यसको प्रतिक्रियामा हामीले पनि अर्को दस्ता बनाउने भन्ने कुरा गर्ने हो भने त युवा माथिको अन्याय हो त्यो ।

निति निर्माणको कुरामा चाहीं केही समस्या छ । एक त युथ अर्गनाइजेशन भित्रै पनि समस्या रैछ । पार्लियामेन्ट पनि कसरी चल्छ त्यसमा पनि समस्या छ । विधी विधान त संसदले बनाउँछ नी । ऐन नियम कानुन बनाउँदा हाम्रो पटक्कै सहभागीता छैन । त्यस्तै गरिकन हाम्रा मन्त्रालयहरुले नितिहरु पनि युवालाई बेगरकै बनाउँछन् । डिमाण्ड साइड पनि कमजोर छ हाम्रो । हाम्रो आवाज सुन भन्ने दह्रो डिमाण्ड पनि त चाहियो नी ।

**डाडु पन्यु युवाकै हातमा भएको दिन हेर्न कति कुर्नु पर्ला ?**

त्यसलाई धेरै अपेक्षा गर्न सकिने कुराको रुपमा पनि हेर्नु हुँदैन । नेपालको सन्दर्भमा के अपेक्षा बाञ्छनीय हुन्छ भने, युवा भविष्य मात्रै हैन, समुन्नत वर्तमान पनि हो । अहिलेको पार्टनर हो । उनीहरुसंग विवेक छ, आइडिया छ, सहभागीता आवश्यक छ र उनीहरुसंग त्यसका लागि अधिकार पनि छ भन्ने कुराको अपेक्षा गर्न सकिन्छ । यसका लागि धेरै कुर्नुपर्ने अवस्था त नआउला, तर अबको हाम्रो बाटो त्यतैतीर हुनुपर्छ ।

**प्रस्तुतिः गणेश आचार्य/प्रमिला थपलिया**

# Texas Insurance Advisors & Premier Tax Services

- TAX SERVICE Starting $35 & up
- FREE E-FILLING with TAX Preparation
- GUARANTEED maximum refund
- AUTHORIZED IRS E-File partner

(Restriction apply)

Free Quotes

(Restriction apply)



AUTO INSURANCE

starting $ 30 & up



HOME INSURANCE

starting $ 40 & up



RENTERS INSURANCE

starting $ 10 & up

**NOTARY & FAX SERVICES**

Located at

3585 N Beltlie Rd, Irving, Tx, 75062 (Near TOM THUMB)

# (972) 256-1800

Call us we speak your language English, Spanish, Nepali & Hindi

# रेलले जोडेको भारत



प्रदीप बस्याल

भारतीय रेलको रक्सौल प्लेटफर्ममा म एक्कासी आत्तिएको थिएँ । 'के भयो दाई ?', साथै बसिराखेका प्रत्युस झाले पनि आत्तिएको भावमै जिज्ञासा राखे । उनको प्रश्न बेवास्ता गर्दै म नजिकैको एक भारतीयतर्फ आँखा घुमाएँ जसमाथि खै किन मलाई केहीबेर अघिदेखी बढि नै शंका लागिराखेको थियो । अचानक मेरो धड्कन बढ्यो किनकि त्यसबेला ऊ त्यहाँ थिएन । 'मोवाइल, मेरो मोवाइल !!', म चर्को स्वरमा आत्तिँदै कराएँ । 'रिल्याक्स दाई, रिल्याक्स, यतै कतै होला ।', प्रत्युसले सानो स्वरमा भन्दै यताउती नजर डुलाउन थाले । नभन्दै एकैछिनमा मोवाइल भेट्टियो पनि, जुन मेरै मुठ्ठीमा दह्रोसँग कसिएको थियो । भएको के रहेछ भने मैले हातमा मोवाइल बोकेर गोजी छामेछु र नभेटेपछि मेरो मनले ठाउँ छाडेको रहेछ ।

हुन पनि यात्रा शुरु नहुँदैदेखि काठमाण्डौमा भारतिय रेलको अनुभव संगालिसकेका एकजना मित्र सविन ज्ञवालीले भनेको कुराले मनमा हरवखत एक प्रकारको सन्त्रास जमाइराखेको थियो । उनले भनेका थिए, 'विहारमा तपाईंले जति भित्र नै सामान लुकाए पनि चोरी हुन सक्छ भने बैङ्लोरमा कतै छुटिहाले पनि भेटिने सम्भावना हुन्छ ।' हाम्रो यात्रा पनि उसले भनेका दुवै ठाउँहरु समेटिने गरी विहारदेखि बैङ्लोरसम्मकै थियो । भारतको बैङ्लोरमा आयोजना गरिएको दक्षिण एसियाली युवा सम्मेलनमा सहभागि भएर फर्कंदासम्म रेलमा मात्र मैले झण्डै १२० घण्टा बिताएर ६ हजार ५ सय किलोमिटरको यात्रा गर्दै थिएँ । जाँदा विहार, पश्चिम बंगाल, उरिसा, आन्द्रप्रदेश, मद्रास हुँदै कर्नाटकासम्म र फर्कने क्रममा आन्द्रप्रदेश, महाराष्ट्र, मध्यप्रदेश हुँदै भारतको राजधानी दिल्ली भएर उत्तर प्रदेशको गोरखपुरमा आएर टुंगिने हाम्रो यात्रा सम्झँदै निकै रोमाञ्चक थियो । भारतको विविधता र असमान विकासलाई उक्त यात्राले रेलको झ्यालबाटै देखाउनेवाला थियो । भारतजस्तो विशाल मुलुकलाई छोटो समयमै जान्न चाहनेको लागि 'रेल यात्रा' सबैभन्दा उपयुक्त माध्यम पनि हुने धेरै लेखकहरुले आफ्ना कृतिहरुमा लेख्ने गर्थे र मैले रेल यात्रा रोज्नुको एउटा मुख्य कारण त्यही नै थियो ।

••

मे १९, २०११ को विहान दश बजे रक्सौलबाट कलकत्ताको लागि रवाना हुनुपर्नेमा हाम्रो 'मिथिला एक्सप्रेस' ४ घण्टा ढिलो भएर छुटेको थियो । विहारका सुख्खा जमिनहरु हुँदै रेलले आफ्नो गति लिइरहंदा विस्तारै नेपाल टेलिकम र एनसेल दुवैका मोवाइलका सिग्नल हराइसकेका थिए । 'वि आर नाउ अफिसियल्ली इन फरेन ल्याण्ड', सम्मेलनका लागि साथै हिंडेका अर्का साथी सौनक भट्ट ठट्टा गरिहाल्थे । हाम्रो टोलीमा




यसरी पहिलोपटक लामो दूरीको रेल चढ्ने म र सौनक मात्र थियौं । त्यसैले टोलीमा रहेका चार मध्ये हामी दुईका लागि यो यात्रा अन्य दुईको भन्दा बढि रोमाञ्चक भइराखेको थियो । हामी बाहिर हेर्नुभन्दा रेलभित्रै फरक फरक पोजमा तस्विर खिच्न तम्सिन्थ्यौं । यहाँ आउनुभन्दा पहिले भएको विहार प्रतिको नकारात्मक अहिलेसम्म अनुभूत गर्न परेको थिएन । हाम्रो डिब्बामा क्षमताभन्दा आधा कम यात्रुहरु थिए । विहारको गर्मी र हपहप आउने तातो हावाको अगाडि पंखाको केही सिप लागिरहेको थिएन । भारत बसाईका लागि भनेर हामीले रक्सौलमा किनेको मोवाइल सिम सञ्चालनमा आउनको लागि कम्तिमा ६ घण्टा लाग्थ्यो तर मोवाइलमा चार्ज सकिसकेको थियो । स्लिपर क्लासमा मोबाइल चार्ज गर्नका लागि दुईटा मात्र 'चार्जिङ प्लग' थिए । त्यसमा भने अन्य मानिसको घुइँचो नै थियो । मलाई त्यो गर्मीमा निद्राले झुकाउन थाल्यो ।

सायद साँझको ९ बजेको थियो जतिखेर एउटा अन्दाजी २५ बर्षिया केटी चिच्याइरहेको आवाजले म ब्यूँझिएँ । । उसले भन्दैथिई, 'आप लोगको प्यारेन्टस् ने म्यानर नई सिकाया । एक लड्की आपके आघे खडे हो और आप लौग आरामसे सिटमे बैठरहेहो ।' उसले त्यसो भन्दैगर्दा असली 'म्यानर' त उसको देखिराखेको थियो तर पनि त्यहाँ बहस गर्नु व्यर्थ थियो । यतिबेलाको परिवेश म सुत्नुभन्दा अघि भन्दा धेरै नै परिवर्तन भइसकेको थियो । सायद तेब्बर मानिसहरु रेलमा थपिएका थिए । ट्रेनभित्र अटेसमटेस थियो र पनि यात्रुहरु सुत्ने तर्खरमा थिए । कोही भुइँमै सुत्न तयार पर्दै थिए । केही मानिसहरु प्लास्टीकका पोकाबाट भात, रोटी, तरकारी झिक्दै खान्थे । भारतिय रेलको अर्को रोचक पक्ष त्यहाँ ब्रगेल्ती भेटिने 'चायवाला' हरु हुन् जो आफैमा एउटा संस्थाजस्तो सकृय भइरहेका हुन्छन् । विहानको दुई बजोस् वा मध्यान्न बाह्र, उनीहरुले आफ्नो तिखो स्वरमा नोटिफिकेसन 'चाय, चाय, गरम चाय' (जुन

आवाज सायद जस्तोसुकै साउन्डप्रुफ कोठामा पनि छिर्न सक्दो हो) दिँदै चिया बेचिराखेको हुन्छन् ।

• •

पश्चिम बंगालको 'हावरा जङ्सल' पुग्दा हाम्रो बैङ्लोरको लागि छुट्ने अर्को रेल 'दूरन्तो एक्सप्रेस' छुट्नको लागि मात्र १ घण्टा बाँकी थियो । यात्रुका दृष्टिले भारतको सबैभन्दा व्यस्त रहने हावरा स्टेसन छिचोल्न उस्तै नयाँ व्यक्तिलाई त एक घण्टा कुनै ठूलो समय नै होइन । 'रेलवे कम्पेक्स' का हिसाबले भारतको सबैभन्दा ठूलो स्टेसन हुनाले पनि यो स्टेसन आफैमा विशाल छ । रक्सौलमा ४ घण्टा ढिलो भएको कारण हामी केही बेर हावरा स्टेशन र नजिकैको 'हावरा ब्रिज' (जसले पश्चिम बंगालका दुई जुम्ल्याहा शहरहरु कलकत्ता र हाउरालाई जोडेको छ) हेर्ने योजनाबाट चुकेका थियौं ।

भारतमा कुनै पनि राज्यको स्तर नाप्न त्यहाँको रेल र त्यहाँका यात्रुहरुको व्यावहारले पनि धेरै हदसम्म सघाउँछ । दूरन्तो शुरु भएपछि अंग्रेजीमा कुरा गर्ने मानिसहरु प्रशस्त भेटिन्छन् र उनीहरु बढि सभ्य पनि हुन्छन् । अझ हामी सवार दूरन्तो सन् २००९/१० को रेलबजेटबाट शुरु भएको नयाँ तथा आधुनिक रेल थियो । ममता बनर्जी रेलमन्त्री (हामी पश्चिम बंगालमा हुँदा उनी भर्खर त्यहाँको मुख्यमन्त्रीमा निर्वाचित भएकी थिइन्) छँदा शुरु गरिएको 'ननस्टप प्वइन्ट-टु-प्वइन्ट' रेलसेवाको रुपमा 'दूरन्तो एक्सप्रेस' थियो जुन मिथिला एक्सप्रेसजस्तो थोरैथोरै समयमा रोक्दैनथ्यो । रेल बंगालको खाडीको किनारै किनार कुद्दा जो कोहीको मनलाई अनायसै रोमान्टिक बनाउँथ्यो । त्यस्तै विशाल भारतको विविधतासँगै उसले विकास गरेका अनेकौं पक्षहरुको प्रशस्त एवं रहरलाग्दा झल्कोहरु पनि देखिन्छन् । भारतको फलाम र कोइलाको बढि स्रोत रहेको राज्यमध्येको एक र समुद्रसँग धेरै सीमाना जोडिएकोले पनि उरिसाले विकासमा अरुभन्दा बढि फड्को मारेको स्पष्ट देखिन्छ । यद्यपि बैङ्लोरसम्म पुग्दा कतै पनि हाम्रो चुरे जत्तिको पनि अग्ला पहाड देखिँदैनन् । मात्र देखिन्छन् लोभलाग्दा स-साना ढुङ्गे पहाडहरु मात्र ।

भारतमा कति सम्म विशाल छ र भारतिय रेल सेवाले भारतीयमा कसरी सहजता ल्याइराखेको छ जान्न एकपटक भारतको रेलयात्रा गर्ने हो भने सजिलै बुझिन्छ । विपन्नदेखि सम्भ्रान्त वर्गका व्यक्तिहरु सबैको लागि यो प्रिय बहानको रुपमा छ । र, भारतिय रेलसेवाले त्यसैकारण रेलका तल्ला तहको भाडादर कम गरिराखेको र माथिल्ला तहको बढाइराखेको हुन्छ । 'सिटर क्लास' र 'अनरिजर्भ क्लास' मा त धेरै भाडा नै नतिरी यात्रा गर्नेहरु पनि हुन्छन् (तर त्यो अति नै बिजोगको यात्रा हुन्छ) ।

• •

*सायद साझको ९ बजेको थियो जतिखेर एउटा अन्दाजी २५ बर्षिया केटी चिच्याइरहेको आवाजले म ब्युझिएँ । । उसले भन्दैथिई 'आप लोगको प्यारेन्टस् ने म्यानर नई सिकाया । एक लड्की आपके आघे खडे हो और आप लौग आरामसे सिटमे बैठरहेहो ।' उसले त्यसो भन्दैगर्दा असली 'म्यानर' त उसको देखिराखेको थियो तर पनि त्यहा बहस गर्नु व्यर्थ थियो । यतिबेलाको परिवेश म सुत्नुभन्दा अघि भन्दा धेरै नै परिवर्तन भइसकेको थियो ।*

नेपालको वा पूरा अस्ट्रेलिया महादेशको पूरा जनसङ्ख्या भन्दा बढि बराबरका भारतीय नागरिकहरु दैनिक रेलमा कुदिराखेका हुन्छन् । यसको सञ्जाल अमेरिका, रसिया र चीन पछिको विश्वको चौथो ठूलो भइकन एउटै संस्था (भारत सरकार) को नियन्त्रणमा रहेको ठूलो संस्थाको रुपमा चर्चित छ । यसको जम्माजम्मी ट्याक मात्र ६४ हजार किलोमिटर छ जसलाई रेलहरुको रुटको आधारमा हेर्ने हो भने अझ बढि हुनजान्छ । अहिले झण्डै साढे १४ हजार रेलहरु भारतमा गुड्छन जसले भारतमा दैनिक तय गर्ने कुल दूरी चन्द्रमा सम्मको दूरीभन्दा साढे ३ पटक बढि हुन्छ ।

यात्रामा बिस्तारै मानिसका दिनचर्या र भाषाहरु फेरिँदै जान्छन् । दक्षिण भारतमा कमै सुनिने हिन्दी भाषा दिल्लीतर्फ लागेपछि ठिक उल्टो हुँदै जान्छन् । अझ भारतमा त्यहाँ स्थानिय भाषाहरु समेत उत्तिकै लोकप्रिय छन् । प्रत्येक राज्यका स्टेशनमा मानिसहरु चढ्ने र ओलर्ने हुँदा भाषाहरु पनि फरकफरक सुन्न पाइन्छन् । पश्चिम बंगालको बंगाली, बैङ्लोरको (कर्नाटका) कर्नडा, आन्द्रप्रदेशको तेलुगु, महाराष्ट्रको मराठी मैले यात्राको क्रममा सुनेका केही हुन् । हामीलाई बलिउड भनेपछि पूरा भारतजस्तो लाग्ने गरेता पनि रेलबाट देखिने स्थानिय भाषाका सीनेमाका पोष्टर देख्दा सजिलै थाहा हुन्छ स्थानिय भाषाका चलचित्रहरु मुलधारको भन्दा बढि लोकप्रिय भएको ।

• •

एक हप्ते सम्मेलन सकेर फर्कने क्रममा दिल्लीको हज निजामुद्दिन स्टेसनमा ओर्लंदा बल्ल तेस्रो लिङ्गीहरुसँग हाम्रो जम्काभेट भयो जसले रेलमा खुबै सास्ती दिन्छन् भनेर नेपालमा मलाई धेरैले भनेका थिए । त्यहाँ उनीहरु समूहमा थिए र एउटी मेरो अगाडि आएर भनिन्, 'जल्दी पेसा निकाल वर्ना नङ्गा नाचदुङ्गी ।' मैले तत्काल केही सोच्नै सकिन । हतास् गोजीमा हात हाल्दा भारु बीस रहेछ र त्यही हातमा राखिदएँ । म यस्तो आत्तिएँ कि सायद त्यसबेला मेरो हातमा जति नै पैसा आएको भए पनि दिन्थें होला । झण्डै ६ हजार ५ सय किलोमिटर रेलमा गुडेर पनि दिल्लीमा रहेको २ दिनको ट्राञ्जिट बसाईमा पनि त्यहाँको आधुनिक रेलसेवा 'मेट्रो'ले नै तान्यो । डेढ करोड जनसङ्ख्या भएको दिल्लीलाई त्यहाँ शुरु गरिएको मेट्रोले गराएको सहजता साँच्चै एउटा नमूना हो जसलाई अहिले बैङ्लोर, पुने, मुम्बाईमा पनि अनुसरण गरिदैछ ।

• •

नेपालमा मलाई जति विशाल भारतको तस्विरले रोमाञ्चित पारिराखेको छ । त्यत्तिकै रोमाञ्चित भारतिय रेलले, जसले त्यही विशाल भारतलाई सहजै जोडेको छ । ◢

www.pradeepbasyal.com.np




# मदन पुरस्कार बिजेता
# अमर न्यौपाने

➤ **आजकल के मा ब्यस्त ?**

o सेतो धरतीले मदन पुरस्कार जितेपछि बिभिन्न कार्यक्रमहरु मै ब्यस्त हुनुपरेको छ ।

➤ **क्स्तो लाईराछ ?**

o जिम्मेवारी बढेको जस्तो लागेको छ साथमा साहित्यले मबाट अझ धेरै आशा गरिरहेछ भन्ने महशुस गरिरहेछु ।

➤ **बजारमा तपाईंको माग बढिरहेको छ नी ? कसरी ब्यवस्थापन गर्नुहुन्छ ?**

o हो, साहित्य साधनालाई निरन्तरता दिँदै आफुसँग भएको समयलाई सक्दो सदुपयोग गर्छु ।

➤ **यी ठुला पुरस्कारले लेखकीय जिवन समाप्त गर्छ भन्छन् नी ?**

o मेरो सवालमा त भर्खर शुरु भएको जस्तो लाग्छ ।

➤ **सफलताको श्रेय कस्लाई दिनुहुन्छ ?**

o आफैंभित्रको अर्न्तप्रेरणा, मिहिनेत र आत्मबिश्वासलाई ।

➤ **श्रेय लिनेहरु त निकै होलान् नी ?**

o साहित्यीक यात्रामा उर्जा थप्नेहरु प्रशस्त हुनुहुन्छ ।

➤ **एकै शब्दमा भन्नुपर्दा सेतो धरतीमा के छ ?**

o करुणा ।

➤ **कस्को लेखाईबाट बढि प्रभावीत हुनुहुन्छ ?**

o विश्वेश्वर प्रसाद कोईराला

➤ **साहित्यका नयाँ यात्रीले पढ्नै पर्ने पुस्तक ?**

o पुस्तक पसल जाँदा उसको चेतनाले जुन जुन पुस्तकलाई छुन्छ तिनै पुस्तक पढ्नुपर्छ ।

➤ **नारी भावना त निक्कै बुझ्नु हुँदोरहेछ नी ?**

o बुझेजस्तो त लाग्थेन तर नारीकै भावना लेखिएको उपन्यास सेतो धरती सबैबाट सम्मानित भएपछि अलिअलि बुझैं जस्तो लागेको छ ।

➤ **सेतो धरती युवाहरुले किन पढ्ने ?**

o बालबिधवाको जीवन र त्यसभीत्र अन्तर्निहित दर्शन, मनोबिश्लेषण र अन्तयात्रा जान्न र बुझ्नको लागी ।

➤ **अब वालबिधवा त ईतिहासमै सिमित हुन लाग्यो नी ? ईतिहास लेखेजस्तो लाग्दैन ?**

o इतिहास र पुराणलाई पनि साहित्यमा सुन्दर ढङ्गले लेख्न सकिन्छ भन्ने उदाहरण विश्वसाहित्यमा हजारौं छन् ।

➤ **बुझेर पढेको पहिलो किताब ?**

o नासो कथासंग्रह जुन मैले १३ बर्षको उमेरमा पढेको थिएँ ।

➤ **साहित्यकार नभएको भए ?**

o चित्रकार

➤ **कुन मज्जा ? साहित्य की चित्रकला ?**

o सबै कलाहरुको मुल कला त एउटै हो प्रस्तुती मात्रै फरक ।

➤ **नारीको भावना बुझेको त स्वीकार्नुभयो, भावनात्मक प्रेम कत्तिको गाँसीयो ?**

o प्रेम बिना त जीवन फूल बिनाको बगैंचा, रस बिनाको रसवरी र गुलियो बिनाको चिनी जस्तै हुन् ।

➤ **प्रेम के हो त ?**

o शरीरमा रगत बगेजस्तै मनमा बग्ने तरङ्ग जस्ले म बाँचेको छु भन्ने कुरालाई बारबार सम्झाउँछ ।

➤ **महिला फ्यान त निकै होलान् नी ? प्रेम प्रस्ताब कत्तिको आउँछ ?**

o प्रेम प्रस्ताव राख्ने कुरो हैन जस्तो लाग्छ । त्यो त आफैं हुन्छ ।

➤ **तपाईंको भयो त ?**

o भयो पटक-पटक मान्छे प्रेम बिना त बाँच्ने सक्दैन नी ।

➤ **साहित्यकारहरु अलि सङ्केका अर्थात एकोहोरो हुन्छ भन्छन् नी ? अरुले नदेखेको देख्ने, नभोगेको भोग्ने अनि नसोचेको सोच्ने ।**

o सङ्केको मान्छे साहित्यकार हुँदैन । त्यो विरामी हो उपचार गर्नुपर्छ । हो साहित्यकारको दृष्टिकोण हरुको भन्दा फरक हुन्छ । उसको छैटौं ईन्द्रिय सक्रिय हुन्छ त्यसलाई सट्केको हैन उच्च चेतना भएको भन्नुपर्छ ।

➤ **भावी योजना ?**

o बाँचुन्जेल लेखिरहने ।

➤ **अन्तमा अमेरिकामा रहेका नेपाली साहित्य प्रेमीहरुलाई के भन्न चाहनुहुन्छ ?**

o नेपालमा बस्ने नेपालीले भन्दा बढी अमेरीकामा बस्ने नेपालीहरुले नेपाली भाषालाई धेरै माया गरेको देख्दा केहि भन्नै सक्दिन । नेपाली साहित्यलाई माया गरिरहनुस बस् यति हो ।

# नेपाली युवा





प्रमिला थपलिया

**युवा** राष्ट्र निर्माणका आधारस्तम्भ हुन् । समाजका उत्प्रेरक हुन र विकाशका शक्ति हुन् । उनिहरुमा रहेको उर्जा शक्तिलाई राष्ट्रले सहि मार्गमा प्रयोग गर्न सके राष्ट्रको मुहार फेरीन समय लाग्दैन तर युवा के हो ? कुन उमेरको समुहको व्यक्ति युवा हो ? युवाका मुद्दाहरु के के छन् भन्ने कुरा नै प्रष्ट नभएको बेला राज्यबाट यति ठूलो आश राख्नु लाजमर्दो हुन आउँछ ।

लामो समयको वहस पछी नेपाल सरकारले वि.स.२०६६ मा राष्ट्रीय युवा नीतिको घोषणा गरेको छ । जसमा युवा १६ देखी ४० बर्ष सम्मलाई भनिएको छ । यसैगरी संयुक्त राष्ट्रसंघले १८ देखी २४ बर्ष उमेर समूहलाई युवा मानेको छ भने विश्व स्वास्थ्य संगठनले र युनिसेफले १५ देखी २४ बर्ष समुहलाई मानेको छ । कुन उमेर समुह भित्रका मानिसलाई युवा मान्ने भन्ने सम्बन्धमा विश्वमा एउटै मापदण्ड रहेको पाइदैन ।

यसैगरी नेपालको राजनीतिक क्षेत्रलाई हेर्ने हो भने ५० नाघेका व्यक्ति युवाका रुपमा स्थापित भैरहेको पाइन्छ । राष्ट्रीय युवा नीति २०६६ ले राज्य सञ्चालनका हरेक प्रकृयामा युवाको सक्रिय सहभागीतालाई सुनिश्चित गर्न राज्यले ठोस कार्ययोजना ल्याउनुपर्ने औल्याए पनि अहिले सम्म देशमा न युवाहरुको मुद्दाहरु संवोधन हुने गरेको छ न कुनै नीति

> युवा शक्ति देशको राजनीतिक, आर्थिक, सामाजिक र सांस्कृतिक रुपान्तरणको संवाहक भएकाले सार्वजनिक नीति निर्माण र कार्ययोजना सबै तहमा युवाको सार्थक सहभागीता सुनिश्चित गर्नु पर्ने युवाहरुको माग रहेको छ ।

निर्माण तहमा युवाको सहभागीता नै । युवा शक्ति देशको राजनीतिक, आर्थिक, सामाजिक र सांस्कृतिक रुपान्तरणको संवाहक भएकाले सार्वजनिक नीति निर्माण र कार्ययोजना सबै तहमा युवाको सार्थक सहभागीता सुनिश्चित गर्नु पर्ने युवाहरुको माग रहेको छ ।

युवाहरुलाई रचनात्मक, बैचारीक र राष्ट्रनिर्माणको अभियानमा क्रियाशिल गराउनु पर्ने वेला राजनीतिक दलहरुले सडक तताउन सिकाए, आन्दोलन गर्न अह्राय, बन्दुक बोक्न उक्साए तर कहिल्यै पनी उनीहरुको भविष्य, सपना र आवश्यकताको बारेमा न बहस गरे न उनीहरुलाई नै सोधपुछ गरे । भन्ने पर्दा युवालाई उनिहरुले कुर्सिमा पुग्ने भऱ्याङ्ग मात्र बनाए ।

युवा देश भित्र रहेका हुन् या देश बाहिर गएका उनीहरुको सपना र रहर भने एकै प्रकारका हुन्छन् । तर देशमा राजनीतिक अस्थिरता, खस्कदो आर्थिक तथा शैक्षिक प्रणालीले गर्दा कयौं युवाहरु आफ्नो रहर र सपना पुरा गर्ने होडमा दिन प्रतिदिन अराजक, लुटपाट, झै-झगडा, दुर्व्यवसनी तथा यौन हिंसामा फस्दै गैरहेका छन् भने त्यती नै रुपमा विदेशिन युवाहरुपनि प्रति घण्टा बढी रहेका छन् । २०६८को तथ्याङ्क अनुसार अहिले १९ लाख भन्दा बढी नेपाली मुलुक बाहिर देखाएको छ । र त्यसमा ९० प्रतिशत युवा नै रहेको देखिन्छ । भने अहिले प्रति दिन १५ सय नेपाली युवाहरु विमानस्थल हुँदै रोजगारीका लागी विदेशिने गरेका छन् । र कयौं युवाहरु रोजगारीको अभावमा आफ्नो अमुल्य समय पत्रपत्रिकामा प्रकाशित हुने रोजगारी, आवश्यकता र चाहियो भन्ने सुचना हेरेर विना कारण खर्चिरहेका छन् । हुन त नेपाल सरकारले युवा स्वरोजगार कार्यक्रम पनि ल्यायो र केही राम्रा कामहरु पनि भए तर कार्यक्रमको निरन्तरता दिन नसक्दा र लक्षित बर्गमा उक्त कार्यक्रम नपुग्दा अहिले युवा वर्गहरु त्यस समस्याबाट गुज्रिनु परेको छ ।




युवा मन्त्रालयले युवा नीतिलाई लक्षित गरेर तिन बर्षको अवधिमा नौ करोड रुपियाँ बराबरको युवा केन्द्रित कार्यक्रम सञ्चालन गरेको भन्ने सुनिए पनि त्यो कार्यक्रम त्यति प्रभावकारी भने बन्न सकेन ।

केही गरुँ भन्ने जाँगर, आँट, शाहस र उत्साह बोकेका युवा जमात सक्ने जती युरोप, अमेरीका, क्यानडा तथा अष्ट्रेलीया पुगेका छन् भने नसक्नेहरु साउदी, अरब, कतार, मलेसीया लगाएत थुप्रै खाडी मुलुकमा पलाएन हुने क्रम प्रति घण्टा बढीरहेको बेला राजनीतिक दलका नेता भनौदाहरुले 'युवा देशका कर्णधार हुन्' भनेर भाषण गर्नु हास्यास्पद हुन आँउछ ।

अर्को अचम्मको कुरा यसरी बेरोजगारी समस्याले युवाहरु दिनदिनै निराश, उदाश र हताश बन्दै गइरहेको बेला फेरी नेपाल सरकारले 'गरीब' प्रमाण पत्र वितरण गर्ने भनेर उल्टै उनिहरुको क्षमता र शाहसलाई निराशामा परीणत गरीदिएको छ भने बर्ग छुट्याएर लज्जित बनाउने काम गरेको छ । गरिबको ट्याग भुण्डाएर बाँच्न शायदै कोही चाहन्छ ।

युवा अधिकारको सन्दर्भलाई लिने हो भने संयुक्त राष्ट्र संघले सन् १९८५ को वर्षलाई अन्तराष्ट्रिय युवा बर्षको रुपमा मनाउने गरी लिएको निर्णय महत्वपुर्ण मानिएको छ । र युवा अधिकारकै विषयमा अमेरिकामा राष्ट्रिय युवा अधिकार संघ स्थापना भई संयुक्त राज्यका सबै युवाहरुलाई युवा वर्गको अधिकारको सुनिश्चितताको लागी गोलबन्द अभियान छ र यही सञ्जालको अभियानको फलस्वरुप बाशिङ्गटन राज्यमा मतदानको उमेर १८ बाट घटाएर १४ बनाउने विधेयक पनी पेश भएको छ । यसैगरी विभिन्न देशमा युवा अधिकार र युवा सहभागीताको लागी विभिन्न आन्दोलन र संघसंस्था हरुको स्थापना भएका छन् ।

युवा अधिकारको सन्दर्भलाई लिने हो भने संयुक्त राष्ट्र संघले सन् १९८५ को वर्षलाई अन्तराष्ट्रिय युवा बर्षको रुपमा मनाउने गरी लिएको निर्णय महत्वपुर्ण मानिएको छ । र युवा अधिकारकै विषयमा अमेरिकामा राष्ट्रिय युवा अधिकार संघ स्थापना भई संयुक्त राज्यका सबै युवाहरुलाई युवा वर्गको अधिकारको सुनिश्चितताको लागी गोलबन्द अभियान छ र यही सञ्जालको अभियानको फलस्वरुप बाशिङ्टन राज्यमा मतदानको उमेर १८ बाट घटाएर १४ बनाउने विधेयक पनी पेश भएको छ ।

समग्रमा जनसंख्याको आधाभन्दा बढी हिस्सा ओगटेको हामी युवा पुस्तालाई जव सम्म व्यवहारीक र बैज्ञानीक आधारमा छुट्याइन्न तब सम्म युवाको मुद्दाहरुको सुनुवाई हुँदैन र साथ साथै युवाका लागी ल्याइएको कुनै पनि कार्यक्रम वास्तवीक युवाको पहुँच सम्म पुग्नै सक्दैन ।

आज सम्म जती पनि राष्ट्र सम्पन्न र समृद्ध भएका छन् ति सबै युवा सिर्जनशिक्ती, सकारात्मक, चिन्तन र सक्रियताका कारण सम्भव भएको हो ।

# ‘अति उदार’ नेपाली चलचित्र



धना खतिवडा

नेपाली चलचित्रको बजारमा के बिक्छ त्यो एकिन रुपमा भन्न गाह्रो छ । पछिल्ला समयमा अन्य विषय वस्तु लिएर निर्माण गरिएका चलचित्र अपवाद हाइबे लगायतको चलचित्रले पाएको व्यापारिक असफलता ले नेपाली दर्शकले रुचाउने भने सेक्स र अपराध हो भन्ने भ्रममा पछिल्लो समयमा चलचित्र निर्माण कर्ताहरु परेका छन् ।




भनिन्छ १० वर्षपछि बगेको खोला पनि फर्कन्छ रे । सायद यस्तै भएको थियो केही समय अघि नेपाली चलचित्र क्षेत्रमा। बर्षैदेखी दर्शकले भरिन नपाएका पुराना हल र केही वर्ष अघिदेखी चलन चल्तीमा आएका मल्टी प्लेक्स हलमा नेपाली चलचित्र हेर्ने दर्शकको घुइँचो लागेको थियो । यस्तो पनि दिन आएको थियो भन्दा अचम्म लाग्न सक्छ, नेपाली चलचित्रको टिकट नपाएर दर्शक फर्किएका थिए । यसको एउटै कारण थियो चलचित्रको कथावस्तुमा नयाँपन । नेपालमा फिल्म अध्यान सँगै यसमा प्रवेश गर्ने युवा पुस्ताको जमात पनि बढेको छ। यसैसँग सजिलो इन्ट्री पाएको छ सस्तो यौनले ।

जुन आवश्यकता भन्दा बढी चलचित्रमा राख्ने गरिन्छ । यो एउटा विषय हो जसले नेपाली दर्शकलाई सामान्य चलचित्रका कथा वस्तुबाट उन्मूक्ती दिएको थियो । यस सँगै यसमा भित्राइएको आवश्यकता भन्दा बढी यौनमा उदारताले गंभिर प्रश्न उब्जिएको छ । कथाको आवश्यकता भन्दा बढी, आफूले टेकेको धरातल बिर्सिएर चलचित्र बन्न थालेका छन्। चलचित्रमा आवश्यक ठानिएका अथवा भनौं जर्बजस्ती आवश्यक बनाइएका यौन पछिल्लो समयमा निक्कै ठूलो चर्चाको विषय बन्यो। ति विषय वस्तु चलचित्रका लागि कति आवश्यक थियो थिएन त्यो त निर्माता तथा निर्देशकलाई नै थाहा होला तर बिक्रीका लागि भने यि गजबका साधन बने।

पुरानो ढर्राको बिचारधार द्वारा निर्माण भएर चलचित्र चलेन भन्ने पुस्ताका लागि नयाँ धारमा निर्माण गरिएका चलचित्र लुट र चपली हाइटले चलचित्रका विश्लेषक, दर्शकबाट सकारात्मक र नकारात्मक दुवै प्रतिक्रिया पाएपनि दर्शक भने राम्रो पाएको थियो । ‘लुट’ अपराधको विषय वस्तु र ‘चपली हाइट’को सेक्स दर्शकका लागि कति फाइदा जनक बने निर्माताका लागि भने लोटरी लागे जतिकै भयो। सुस्ताएको चलचित्रको बजारमा केही आसाका किरण भने यि चलचित्रको व्यापारले अवश्य थपे ।

यि बिचमा हामिले स्वीकार गर्नुपर्ने कुरा के हो भने यि चलचित्रले नेपाली चलचित्र प्रतिको युवा पुस्ताको आम बुझाइ प्रति भने परिवर्तन गरिदिएकै हो । चलचित्रको परम्परागत निर्माण शैली र कथा वस्तुमा विविधता थपेकै हो। नेपाली चलचित्रको इतिहासलाई फर्केर हेर्दा सेक्स नौलो कुरा होइन पुराना निर्माण गरिएका चलचित्र पनि यौनका विषय वस्तु बाट अछुत छैनन् । यति हो पहिला चलचित्रको कथा अनुसार यस्ता सामाग्री समेटिन्थे जो पब्लीसिटीको साधन भन्दापनि चलचित्रको कथाको परिपुरकको रुपमा रहेका हुन्थे।चलचित्र सन्तानमा नायिका करिश्मा मान्नधरले बेड सिन दिएर नेपाली चलचित्र जगतमा डेब्यू गरेकी थिइन्। त्यसपछि भने उनले सस्ता दृश्य चलचित्रमा दिइनन् ।आफ्नो स्टारडम बचाइराख्न सफल भइन् । केही समय अघि कुराकानीमा नायिका झरना थापाले हिन्दी फिल्म डर्टी पिक्चरमा विद्या बालनले जस्तो कथालाई न्याय गर्न सक्ने दृश्य दिन आफूलाई आपती नभएपनि सस्ता दृश्य चलचित्रमा देखिन कै लागि नदिने धारणा राखेकी थिइन। उनी आफ्नो बिचारमा कतिको अडिग बस्नेछिन त्यो त समयले नै देखाउला तर पछिल्लो समयमा नयाँ पुस्ता भने चलचित्रमा आफ्नो उपस्थिती देखाउन मात्र यस्ता सस्ता दृश्य दिन थालेको छ ।







नयाँ धारमा बनेको चलचित्रले हासिल गरेको व्यापारिक सफलताले चलचित्र निर्मातामा नयाँ विषय वस्तुको विजारोपण गरिदियो। पछिल्लो पुस्ताले रुचाउने भनेकै सेक्स र क्राइम हो भन्ने धारणा विकास गरिदियो जस्ले गर्दा यौन र अपराध पछिल्लो समयका चलचित्रका निर्माताका लागि गतिलो खुराक बनेर आइदियो । यसैको अवधारणा बोकेर आएको अपराध र सेक्सको मिक्स अप  फमूर्ला सुरज सुब्बा नाल्बोको चलचित्र सायद ले पछिल्ला दुई चलचित्रले तताएको बजारलाई केही धानेको अनुभव हामिले गऱ्यौ। निर्माताले पनि व्यापारिक सन्तुष्टी व्यक्त गरेका थिए।धैरै चलचित्रका निर्माता संचार माध्याम को अगाडी सन्तुष्ट देखिने गरेका छन् । सायद चलचित्रको निर्माताको अभिव्याक्ती झुटो थिएन भन्ने मैले यहाँ मानेकी छु । त्यसपछि आएको युवा पुस्ताका निर्देशक दिपक रौनिहारको बहुप्रतिक्षित चलचित्र हाइवे नयाँ शैलीमा निर्माण गरिएको दाबि गरिएपनि दर्शकको चित्त बुझाएर व्यापार गर्न भने असफल बन्यो । चलचित्रमा नयाँ भनेर प्रयोग गरिएको धेरै कथावस्तु नै मेस साबित भैदियो। त्यसपछि पनि थुप्रै चलचित्र रिलिजमा आए । ति चलचित्र रिलिज भएको पत्तो दर्शकले पाए न आउट भएको नै। यिनै बिचमा आएको राज बल्लभ कोइरालाको चलचित्र अपवाद अंग्रजी चलचित्र इन्टो दि वाइल्ड को  केही कथावस्तुको सापटी लिएर नेपाली शैलीमा निर्माण गरिए पनि व्यापारिक रुपमा सफल बनेन ।

नेपाली चलचित्रको बजारमा के बिक्छ त्यो एकिन रुपमा भन्न गाह्रे छ । पछिल्ला समयमा अन्य विषय वस्तु लिएर निर्माण गरिएका चलचित्र अपवाद, हाइबे लगायतको चलचित्रले पाएको व्यापारिक असफलता ले नेपाली दर्शकले रुचाउने भने सेक्स र अपराध हो भन्ने भ्रममा पछिल्लो समयमा चलचित्र निर्माण कर्ताहरु परेका छन् ।

यिनै धारणाको उपज सस्ता यौनका उत्तेजक दृश्यहरु राखेर चलचित्र

नयाँ धारमा बनेको चलचित्रले हासिल गरेको व्यापारिक सफलताले चलचित्र निर्मातामा नयाँ विषय वस्तुको विजारोपण गरिदियो। पछिल्लो पुस्ताले रुचाउने भनेकै सेक्स र क्राइम हो भन्ने धारणा विकास गरिदियो जस्ले गर्दा यौन र अपराध पछिल्लो समयका चलचित्रका निर्माताका लागि गतिलो खुराक बनेर आइदियो ।

निर्माण गर्न थालिएको छ । यस्ता चलचित्र बिक्छन कि बिक्दैन त्यो त चलचित्र रिलिज भएपछि नै थाहा होला तर चलचित्रमा नायक नायिकाले दिएको दृश्य भने पछिल्लो समयमा फिल्मी बजारमा राम्रै गसिप भएका छन् । चलचित्रका कलाकार चलचित्र रिलिज अगावै चर्चित बनेका छन्। जस्ले गर्दा फिल्म क्षेत्रमा प्रवेश गर्नका लागि जे गर्न पनि पछि नपर्ने कलाकारको जमात बढेको छ ।

पछिल्लो समयमा निर्माण गरिएका चलचित्रहरु द लास्ट किस, एटिएम, इन्द्रावती, किन किन र बिन्दास मा समेटिएका दृश्य पनि शहरमा चर्चाको राम्रो विषय वस्तु बन्यो। चपली हाइट बाट सुरु भएको सेक्सलाई जर्बजस्ती राख्ने प्रवृत्तिलाई यि चलचित्रले बढुवा दिएका छन् । यस्ता खालका चलचित्रले यिनै चलचित्र भित्रका दृश्य र प्रचारका लागि खिचिएका फोटोहरुलाई लिएर बेला बेला स्क्याण्डल मच्चिने गरेको छ। कहिले काही यस्ता स्क्याण्डल पनि फलदायि बन्ने गरेका छन्। चलचित्र चपली हाइटको बिनिता बराल र अमिर गौतमको टपलेस फोटो







**पछिल्लो समयमा निर्माण गरिएका चलचित्रहरु द लास्ट किस, एटिएम, इन्द्रावती, किन किन र बिन्दास मा समेटिएका दृश्य पनि शहरमा चर्चाको राम्रो विषय वस्तु बन्यो। चपली हाइट बाट सुरु भएको सेक्सलाई जर्बजस्ती राख्ने प्रवृत्तिलाई यि चलचित्रले बढ्वा दिएका छन् ।**

स्क्याण्डलले पनि चलचित्र हिट बनाउँन भूमिका खेलेको चर्चाले एक समय चलचित्र बजार तातेको थियो।

निर्देशक तथा समिक्षक मनोज पण्डित अभिव्याक्ती सम्झिए उनले कुराकानीको क्रममा भनेका थिए चलचित्रमा निर्देशले जस्तो दृश्य समेटे पनि कलाकारले जस्तोसुकै सिन दिए पनि यसलाई स्वीकार अथवा भनौ अस्विकार गर्ने जिम्मा त्यो त दर्शकको हातमा रहेको हुन्छ । उनले यस्ता खालका सिन हिजो पनि नेपाली चलचित्रमा समेटिएको भएपनि पहिले दिइएका चलचित्रका सिन अहिलेका फिल्मी सिन जस्तो विवादमा आउँदैन थियो भनेका थिए ।

आस गरौ उनले भनेजस्तै त्यस्ता खालका चलचित्रलाई दर्शकले आफै अस्वीकार गरुन जसमा आवश्यकता भन्दा बढी यौनका सामाग्री समेटिएको छ । तर पनि यस्ता विषय वस्तुको त्यो पनि चलचित्रको कुरा हुदाँ भने गम्भिर बन्न आवश्यक देखिन्छ । च्लचित्र कसैको एकल भान्सामा पकाएको तरकारी होइन । मिठो लागे खाने र नमिठो लागे फ्याँकिदिने यो त राष्ट्रको पहिचानसँग जोडिएको कुरा हो। समाजको ऐना भनेर मानिदै आएको चलचित्रले आफ्नो मौलिकता गुमाउँदै गएर यौनमा मात्र केन्द्रित हुन थालेपछि हाम्रो पहिचान कता जाने हो त्यो भन्न कठिन छ । पहिचान विहिन भएपछि त्यसलाई नेपाली चलचित्र भन्नु भन्दा पनि नेपाली भाषाको चलचित्र भन्न उत्तम होला । चलचित्रमा समेटिने भाषा मात्र नेपाली भएपछि त हामी सँग यस्ता चलचित्रलाई नेपाली भाषाको चलचित्र मात्र भन्नुको विकल्प नै हुँदैन ।

संवाद को भाषा नेपाली र अंग्रेजी हुँदैमा चलचित्र नेपाली हुँदैन। नेपाली हुनका लागि रहन सहनको शैली र बाँचेको शैली पनि नेपाली हुनुपर्छ। यौनलाई विषय वस्तु बनाउँदैमा विदेशी पोर्न फिल्म शैलीमा चलचित्र निर्माण गर्नुको कुनै औचित्य छैन । नेपाली समाजमा पनि यौन छ । यसको आफ्नै शैली र संस्कार छ । नेपाली दर्शकका लागि चलचित्रको निर्माण गर्छु भन्नेले आफ्नो शैली र संस्कार पनि प्रस्तुत गर्नु पर्‍यो । विदेशी चलचित्रको नक्कल गर्दैमा नेपाली चलचित्र चल्ने भ्रममा निर्माताहरु नपरे हुन्छ । इन्टरनेटको पहुँच भएको अवस्थामा नेपाली चलचित्रका दर्शकले जुन भाषाको जस्तो चलचित्र पनि हेर्न सक्छन् भन्ने कुराको हेक्का चलचित्र निर्माण कर्ताले राख्न जरुरी छ ।

विभिन्न भाषाको नक्कल गर्न सक्ने हाम्रा चलचित्र निर्माताले ति चलचित्रले प्रयोग गरे जस्तै आफ्नो शैलीको नक्कल गर्न जान्न जरुरी छ।चलचित्रमा प्रयोग गरिएका सिन र परम्परा नेपाली होस् भावनाको कुरा त जुन देशमा गएपनि एउटै हुन्छ यती हो त्यसलाई प्रयोग गर्ने शैली सबैको आ आफ्नै हुन्छ । मेरो अपेक्षा यति मात्र हो, नेपाली चलचित्रमा सबै कुरा आओस तर आफ्नै शैलीको जसमा हामिले गर्व गर्नसक्ने ठाउँ हो विषय वस्तु यौन अथवा भनौ जेसुकै होस् तर पनि यसमा हाम्रा नेपालीपन बोकेका कलाकार हुन र हाम्रा कलाकार हुन तपाईले जतिसुकै नक्कल गरेपनि तपाई विदेशी बन्न सक्नु हुन्न र जस्तासुकै सामाग्री दिएपनि सन्नी लिओनका पोर्न फिल्मको विकल्पका रुपमा तपाई लाई विदेशी त के नेपाली दर्शकले पनि लिदैनन् । त्यसैले बेलैमा विचार गरेर आफूलाई बचाउँने कोशिश गर्न जरुरी छ ।



# मृत्यु विक्रीमा छ



अर्याल सुरज

रात चकमन्न थियो । आकाशमा बग्रेल्ती ताराहरु निरास निरास पिल्पिलाईरहेका थिए । त्यो दिन, निदाउन सकिरहेको थिइन म । निदाउने हरेक प्रयासहरु असफल भइरहेका थिए । किन किन शुन्य लागइरहेको थियो आफ्नै मन? कतै केहि नमिलेजस्तो, कतै केहि नपुगेजस्तो, निरस र निस्सार ? ओच्छयानसंगैको झ्यालको पर्दा खोलें बाहिर हेरें । बाटोमा हिंडिरहेका सवारीहरुको बत्तीको उज्यालो आइपुग्छ कोठासम्म । चारैतिर उज्यालो भरिन्छ- झलमल्ल । डर लाग्छ आफैंसंग त्यो उज्यालोमा । आफ्नै छायाँसंग तर्सेको जस्तो हुन्छ । मुटु ढुक्क फुल्छ तर किन ??? को संग डराईरहेको छु म ? के ले तर्साइ रहेछ मलाइ ? किन डर लाग्दैछ उज्यालोसंग ? बेहोस जस्तै भएको छु म हिजोआज । दिमाग कुनै पनि कुरामा एकत्रित गराउन सकेको छैन । मनमा नानाथरिका कुराहरु खेलिरहन्छन- सबै नकारात्मक मात्र । सोच्छु के म नकारात्मक सोचको सिकार भैरहेको त छैन ?

सपनाहरु पनि त्यस्तै त्यस्तै देख्न थालेको छु, कहिले आफ्नै मृत्युको उत्सब मनाइरहेको हुन्छु त कहिले आफ्नै नजिकका मान्छेहरुको, हरेक सपनाहरु केहि न केहि अर्थ राख्ने खालका देखेको छु हिजो आज । तर के अर्थ राख्छन आफैलाई थाहा छैन ? कुनै ठुलो दुर्घटना अगाडिको शुन्यताको भान हुदैछ मलाइ । डर लागि रहेछ भित्र भित्र, आफैदेखि । आफ्नै परिवारदेखि अनि नजिकका साथीभाई र अफिसका स्टाफहरु सबै देखि डर मात्र लाग्न थालेको छ । कसैलाई बिश्वास गर्न सकिरहेको छैन । साथीभाईहरुका सल्लाहहरुमा ठुलै षड्यन्त्रको आभास हुँदैछ । दाजुभाई-इष्टमित्रको सुझाब पनि नमिठो लाग्दैछ । सबैको माझमा पनि म एक्लै छु जस्तो लागेको छ । फेरी एकपटक चहकिलो उज्यालो पस्छ कोठाभित्र र म फेरी झस्किन्छु त्यो उज्यालोसंग ।

किन यस्तो हुँदैछ मलाइ आज भोलि ? किन डर लाग्दैछ, आफ्नै मान्छेहरुसंग ? ओच्छयानबाट उठेर नजिकै रहेको पानीको जगबाट अलिकति पानी पिउँछु र सिरानीको नजिकै रहेको बत्तीको स्विचनेर हात पुर्याएर स्विच अन गर्छु- बत्ती बल्छ झलमल्ल । धन्न आज लोडसेडिङ्ग रहेनछ यति बेला । यसो घडी हेर्छु : रातको ११ बजेर ४० मिनेट गएको रहेछ भर्खरै ।

निदाउने उपक्रमहरु लगभग सबै फेल भएको अवस्थामा मेरो लागि इन्टरनेट एउटा भरपर्दो सहयात्री हुनसक्थ्यो समय कटाउने, त्यसैले छेवैको टेबलमा रहेको ल्यापटप समातेर अन गर्छु र इन्टरनेट कनेक्ट गर्छु, इन्टरनेट कनेक्ट हुनासाथ क्रोम ब्राउजरमा एकैपटक धेरै ट्याबहरु खोलेर, फेसबुक........, ट्विटर.........., जी-मेल......... र आफ्नै ब्लग खोलेर हेर्छु, जी-मेल मा एउटा मेसेज आएको रहेछ । Secret Admirer को नामबाट जहाँ लेखिएको थियो-

Sorry for this message,

But you compelled me to write something anonymously. Actually I saw you today years later and again your face made me crazy about you. I have nothing to share with you right now. Only I want to let you know that I opened this account only for you and I have a Facebook account in same identity. I added you in my friend list. Hope you'll accept and we'll have a wonderful talk over there.

See you on Facebook.

बिना कुनै नाम र परिचय आएको त्यो इ-मेल पढिसकेपछि फेसबुक हेरें, त्यहाँ २ वटा फ्रेन्ड् रिक्वेस्ट आएका रहेछन । जसमध्ये एउटा त्यहि Secret Admirer को नामको थियो । एकछिन एक्सेप्ट गरुँ कि नगरुं भनेर सोच्दै थिए । मनले भन्यो, “गर गर नत्र फुत्काउलास सजिलै हात पर्न लागेको चिज ।” मसंग कुरा गर्नको लागि, भनौं मेरै लागि भनेर कसैले जी-मेल देखि फेसबुकसम्म सबैतिर छद्म नाममा एकाउन्ट खोल्छ भने पक्कै पनि त्यसको पछाडी कुनै न कुनै राज अवस्य छ भन्ने सोचेर एक्सेप्ट गरें । नोटिफिकेसनहरु हेर्न मात्र थालेको थिएँ । च्याटको आवाज सहित ब्राउजरको तलपट्टी रातो बत्ती बल्यो, क्लिक गरें उही रहिछे । Secret Admirer भन्दै थिइ -

सपनाहरु पनि त्यस्तै त्यस्तै देख्न थालेको छु कहिले आफ्नै मृत्युको उत्सव मनाइरहेको हुन्छु त कहिले आफ्नै नजिकका मान्छेहरुको, हरेक सपनाहरु केहि न केहि अर्थ राख्ने खालका देखेको छु हिजो आज। तर के अर्थ राख्छन आफैंलाई थाहा छैन ? कुनै ठुलो दुर्घटना अगाडिको शुन्यताको भान हुदैछ मलाइ।

- So sweet of you. Thank you
- You are most welcome मैले पनि औपचारिकता पुरा गरें।
- No formalities, Please उसले भनि।
- Ok, let's talk in an informal way then, what's your good name? मैले अनौपचारिक कुराकानी गरौं न त भनेर औपचारिक प्रस्ताब राखें।
- "कति हतार", उसले भनि।
- "हुदैन त, को हो ? के हो ? केहि चिन्दै नचिनी के कुरा गर्नु त ?", मैले भनें।
- "नडराउनुस, म राम्रोसंग चिन्छु तपाइंलाई। त्यसैले कुरा गर्न मन लागेको तपाईंसंग ?", उसले भनि।
- "साँच्चै, तपाईं त मोटाउनु भएछ त पहिलाको भन्दा।", उसले फेरी थपी। "मैले हिजो देखें नि तपाइंलाई बाटोमा निकै पछी ?", मलाइ केहि कुरा सोध्ने अवसर नै नदिइ एकोहोरो उसले लेखिरहि।
- "हो र ? बाटोमा रे ? कहाँको बाटोमा ?", मैले सोधें।
- "न्युरोड, जर्मन बेकरी क्याफे बाहिर, सायद तपाईं साथीहरुसंग हुनुहुन्थ्यो।", उसले भनि।
- "ए, हिजो हो है। अँ म साथीहरुसंग कफी खान गाको थें ?", मैले भनें।
- "कफी खान क्याफे मा ? अनि त्यो पनि केटा साथीहरु संग ? बिचरा ?", उसले मेरो मनकै कुरा बोली। सायद, कहिले काहीं त मलाइ पनि आफ्नै अवस्था देखेर दिक्दार लाग्थ्यो, जहिले आसपासको टेबलहरुमा मस्किदै कफिको चुस्की लगाउदै गरिरहेका जोडीहरु हेरेर थुक निल्दै बस्नुको विकल्प थिएन म संग। कल्पना गर्थें कहिले काहीं त आफनै पनि गर्लफ्रेन्ड होस्। अनि संगै गएर मस्किदै कफी पिउदै गरेको।
- "सर कफी", वेटरको बोलीले झसङग हुन्थें धैरै जसो। छिनभरमै सबै ग्वार्लाम्म्गुर्लुम्मै हुन्थ्यो र म फेरी बास्तबिकतामा फकिर्न्थें। "भाइ एउटा सुर्य।", त्यहि झोंकमा अर्को एक खिल्ली चुरोट मगाउथें र रमाउथें त्यसैसंग।
- "केटि साथि त हुनु पनि पर्यो नि संगै कफी खान जाने खालको।", मैले भनें,
- "नभए बनाउनु पर्यो नि त बोस।", उसले फेरी पनि जिस्किंदै भनि।
- "बन्ने हो ?", जिस्किएँ म पनि।
- "बनाउने हो ?", उ पनि के कम, मलाइ झन च्यालेन्ज नै पो गरि।
- के भन्ने, के नभन्ने सोच्दा सोच्दै मैले स्माइली टाइप गरेर इन्टर थिचे।,
- "खोइ त मेरो उत्तर ?", उसले फेरी प्रश्न गरि।
- "के कुराको उत्तर ?", मैले कुरा नबुझे झै गरें।
- "Stupid, Still I love you", उसले भनि,
- "Ha ha ha, Good joke", मैले उसको कुरालाई हावामा उडाइदिएँ।
- So, still you are the same, not a single change in your behavior. Anyway liked it. Keep it with you.
- उसले मलाइ निकै पहिले देखि चिनेको जस्तै गरि भनि, हुनत उसले मेल गरेर भनिसकेकी थिइ अनि भर्खरै पनि निकै मोटाउनु भएछ पहिला भन्दा भनेर भनेकि थिइ। त्यसैको आधारमा पनि उसले मलाइ पहिला देखि नै चिन्छे भन्ने कुरामा कुनै शंका बाँकी रहेन।

त्यसैले मैले भरमग्दुर प्रयार गरें की उ को हो ? मलाई कसरी र कहिले देखि चिन्छे ? के यो त्यही केटी हुन जसले मलाई बेवारिसे बनाएर अलपत्र छाडेकी थिई, जीवनको कुनै मोडहरुमा ? होइन, त्यो कसरी सम्भव हुन सक्छ ? जब कोही तिमीलाई जीवनको कुनै अप्ठेरा मोडहरुमा अलपत्र छाडेर जान्छ र फेरि जब तिम्रो जीवनले गति लिन थाल्छ अनि त्यही व्यक्ति यो वा त्यो स्वरुपमा तिम्रो जीवनमा कसरी प्रवेश पाउन सक्छ ? त्यसैले मैले भरमग्दुर प्रयास गरेको थिएँ, उसको वास्तवविकता वा भनुं परिचय पत्ता लगाउन तर अहँ कसै गरे पनि त्यो बारेमा सोध्यो कि उसको एउटै जवाफ हुन्थ्यो, धम्कीपूर्ण-

- "तपाई नचिनेको मान्छेहरुसंग बोल्नु हुँदैन भने ठिक छ मलाई ब्लक गर्नुस्, तर मलाई थाहा छ तपाईको बानी राम्रोसंग", उसले धम्की दिंदै अझ थपी।
- "चिनेकोसंग कुरा गर्नुहुँदा कसरी र नचिनेकोसंग कसरी अनि कतिबेर कुरा गर्नुहुन्छ सबै थाहा छ मलाई, धेरै गफ नदिनु", मैले केही भन्न नपाउँदै सबै भनिसकी उसले।
- "ल ल भयो, तिमीसंग कुरा त गरुँला तर दुवैले नचिनेको जस्तो पनि त भएन नी, मैले पो चिन्दिन त तिमीलाई, तिमीले त चिन्छौ भो मलाई, अनि कसरी कुरा गर्नु त तिमीसंग ? चिनेको मान्छेसंग जसरी कुरा गरु भन्ने चिनेको छैन अनि नचिनेको मान्छेसंग जस्तो कुरा गरुँ भने दुवै एक-अर्कासंग अपरिचित छैनौं, सम्बोधनको लागि पनि त नामको जरुरत हुन्छ, नाम त भन।", मैले भनें।
- "म एउटा नाउँ दिन्छु तपाईलाई मसंग कुरा गर्न, तपाईले मलाई त्यही नामले सम्बोधन गर्नुस् तर त्यो मेरो वास्तविक नाउँ होइन।", उसले भनी।

**क्रमशः**

# राशिफल

पं. मणिराज ज़ोशी



## मेष

सुरुमा स्वास्थ्य कमजोर रहने हुनाले मनमा चिन्ता बढ्नेछ। खानपानमा बिशेष ध्यान दिनपर्ने देखिन्छ। साना-साना घरेलु समस्याहरुले दुख दिन सक्नेछन्। पठनपाठनमा अवरोध आउन सक्नेछ। धार्मिक तथा पर्यटकिय यात्राको संयोग मिल्नेछ। महिनाको पुर्वाद्धमा अँटेका कार्यहरु बन्नेछन्। प्रेममा सामान्य खटपट हुने योग देखिन्छ।



## वृष

उचित समयमा निर्णय नहुँदा हातमा आएको काम फुत्कन सक्छ। पैसाको लेनदेनमा सावधानी अपनाउनु होला। तपाईंले चिताएका कुराहरु सहजै पुरा हुनेछन्। आत्मिय साथीभाईहरु सँग रमाईलो भेटघाट हुने बदेखिन्छ। पठनपाठनमा तिब्र गतीमा सुधार आउनेछ। पति पत्नी बीच सामान्य मतभेद रहनेछ।



## मिथुन

भाग्यले मनग्गे साथ दिनेहुनाले प्रशस्त धन कमाउने ठुलो अवसर मिल्नेछ। महिनाको पूर्वाद्धमा कर्म बलियो हुँदा मान सम्मान पाउने र मिष्ठान्न भोजन मिल्ने योग छ। शत्रुहरु परास्त भएर जानेछन्। महिनाको उत्तरार्द्धमा स्वास्थ्यमा केहि गडबडी हुनुको साथै धन सम्पत्तीको क्षती हुनेछ। खासगरी सवारी साधनहरुसँग सावधान रहनुपर्ने देखिन्छ। प्रेम गर्नेहरुको लागी समय ठिकै छ।



## कर्कट

गरिरहेको कामबाट राम्रो आम्दानी हुने हुँदा कामलाई निरन्तरता दिनु आवश्यक देखिन्छ। साथीभाईहरुसँग मन रम्ने तथा सहयोगको आदान प्रदान हुनेछ। कला तथा साहित्यको क्षेत्रमा मन जाने देखिन्छ। धेरैको बिश्वास आर्जन गर्न सकिने हुँदा नयाँ कामको लागी अर्थ जुट्ने हुनाले नयाँ कार्य शुरु गर्न सकिनेछ। पढाई लेखाईमा ठूलो सफलता मिल्नेछ। रिसलाई नियन्त्रण गर्नुहोला अन्यथा नसोचेको लफडामा पर्न सकिनेछ।



## सिंह

मनमा चञ्चलता बढ्नेछ, विवाहको प्रस्ताव आउनुको साथै विवाहको योग देखिन्छ। पढाई लेखाई र बौद्धिक काममा मन जाने देखिन्छ। धन सम्पत्तीको गलत प्रयोग हुनसक्ने तर्फ सजग भए लाभदायक हुनेछ। समयको ख्याल गर्न सके मनग्य धन तथा मान आर्जन गर्न सकिनेछ। सन्तान सुख प्राप्त हुनेछ। महिनाको अन्तमा केहि अशुभ खबर सुन्नुपर्ने हुनसक्छ।



## कन्या

गरेको कामहरुमा सफलता मिल्ने योग भएकोले नयाँ काम शुरु गर्न गर्न सकिनेछ। नसोचेको ठाउँबाट धनको लाभ हुनसक्छ। प्रेम प्रसंगमा अलिक बिचार पुऱ्याउँदा राम्रो हुने देखिन्छ। शत्रुहरु लागे पनि विजय आफ्नै हुने देखिन्छ। पठपाठनमा मन नलाग्ने तथा मीत्रहरुबाट धोका हुन सक्नेछ।

# राशिफल



## तुला

बोल्नु भन्दा अगाडी बीचार गरेर नबोले पछुताउनुपर्नेछ । धनको प्रयोग गर्दा सजग हुनु जरुरी छ अन्यथा धनको गलत प्रयोग हुनसक्ने सम्भावना छ । घर परिवारमा वैमनस्यता बढ्ने योग छ । घरेलु कार्यमा रुची बढ्ने तथा प्रेममा सफल हुने योग छ । स्वास्थ्य गडबड आउने देखिएकाले खानपानमा विशेष ध्यान दिनुहोला ।



## वृश्चिक

व्यवसायमा सामान्य सफलता मिल्नेछ । ठगहरुको चङ्गुलमा पर्न सक्ने सम्भावना रहेकोले सजग रहनुहोला । पारिवारिक सुखभोग गर्न पाईने योग रहेको छ । प्रेममा आंशिक सफलता पाउन सकिन्छ । महिनाको अन्तमा कुनै चल सम्पती जोड्ने योग रहेको छ । महिनाको उत्तरार्द्धमा मनमा चिन्ता बढ्ने तथा बोली खेर जाने देखिन्छ ।



## धनु

समय धेरै नै लाभदायक रहेकोले नयाँ अवसरहरु प्राप्त गर्न सक्नुहुनेछ । सर्वोत्तम कार्य सिद्धी हुने तथा अर्थ शक्ति बढेर जाने देखिन्छ । शत्रु सेलाउने छन् प्रेममा सफलता प्राप्त गर्न सकिने योग रहेको छ । महिनाको उत्तरार्द्धमा स्वास्थ्यमा सामान्य समस्या देखिनुका साथै पढाईबाट रुची हट्ने देखिन्छ । सानो कामका लागी पनि निकै ठूलो प्रयास गर्नुपर्नेछ ।



## मकर

मान सम्मान प्रतिष्ठा बढ्ने तथा आँटेको कार्य सहजै पुरा हुने योग रहेको छ । आत्मबल बढ्ने छ । कुरा काट्नेहरु तपाईंको तारिफ गर्न शुरु गर्नेछन् । स्त्री वर्गको सल्लाह अनुसार कार्य गर्नु उत्तम देखिन्छ । छोटो दुरिको यात्राहरु मनग्गे हुने देखिन्छ । व्यापारबाट प्रशस्तै लाभ हुने देखिन्छ । प्रेममा सामान्य रहने योग छ ।



## कुम्भ

धार्मिक कार्यमा मन लगाउँदा शुभ हुने तथा मनमा शान्ती हुने देखिन्छ । आय आर्जनको नयाँ स्रोत खुल्नुका साथै धन सम्पत्तीको खर्च पनि बढ्ने योग छ । प्रेमीसँगको भेट बाक्लीनेछ भने घरपरिवारमा भएको खटपट अझै बढ्नेछ । वाहनको जोर जाम हुन सक्नेछ । कुनै मन परेको सामान हराउन सक्ने हुदाँ सतर्क रहनुहोला ।



## मिन

पर्यटनका व्यवसायबाट धेरै धनआर्जन गर्न सकिनेछ । बिदेश यात्राको योग रहेको छ । पढाई लेखाईमा सामान्य प्रगती हुने देखिन्छ । प्रेममा धोका पाउने योग रहेकोले सतर्क रहनुहोला । कडा प्रतिस्पर्धा पछि आँटेको काम बन्ने छ । परिवारमा अनावश्यक कुरामा किचलो हुने योग रहेको छ । यात्रा गर्दा सावधानी अपनाउनु होला ।

# सपना हुँदैछ पुरा



अरुणा घिमिरे




'क्रिकेट खेल्ने मुर्ख र हेर्ने महामुर्ख' जर्ज बर्नाड साको यो भनाईलाई कुनै बेला नेपालमा धेरैले आत्मसात गरेका थिए। क्रिकेटप्रति धेरैको खासै लगाव थिएन। खेलेर मुर्ख अनि हेरेर महामुर्खको पगरी गुथिने हो की भन्ने डर थियो सबैलाई। जानीजानी आफूलाई मुर्खको कोटीमा कसले पारोस !

तर आज समय फेरिएको छ। छिमेकी राष्ट्रमा अत्यधिक लोकप्रियता कमाएर, एक धर्मकै रुपमा स्थापित भैसकेको क्रिकेटले नेपालमा पनि उत्तिकै प्रशंकस बटुलिसकेको छ। अहिले क्रिकेट नेपालको लागि समेत एउटा रोचक खेलको रुपमा स्थापित हुँदैछ। पहिले पहिले तराईमा मात्र खेलिने क्रिकेट अहिले आएर सबै वर्ग, क्षेत्र, जातजाति र सबै उमेर समुहको लागि साझा र रोचक खेल बनेको छ।

कुनैबेला क्रिकेटको नाम लिन डराउन, क्रिकेटको नियमबाट जानकार नभएकाहरु पनि अहिले, "ओए नेपालको स्कोर कति भयो ?" भन्छन् आज भोलि। नेपालको खेल हुँदा हजारौं दर्शक खेल हेर्न मैदानमा पुग्छन् अनि घाँटी सुक्नेगरी हुटिङ्ग गर्छन्ः नेपाल, नेपाल, नेपाल।

खेल भएका दिन फेसबुक र ट्वीटर जस्ता सामाजिक संजालका भित्ताहरु क्रिकेटकै चर्चाले भरिन्छन्। यसले नै पुष्टी गर्छ, नेपालमा क्रिकेटको क्रेज बढ्दैछ। यसको श्रेय अरु कसैलाई नेपालले अन्तराष्ट्रिय प्रतियोगितामा उत्कृष्ट प्रर्दशन गर्दै ल्याएको राम्रो नतिजालाई नै जान्छ।

सन् १९९६ को सेप्टेम्बरमा भएको एसीसी ट्रफी अर्न्तगत बंगलादेश विरुद्ध खेल्दै अन्तराष्ट्रिय प्रतियोगितामा पाइला टेकेको नेपालले सन् २०१२ मा नेपाली क्रिकेट इतिहासकै सबैभन्दा ठुलो सफलता चुम्न सफल भयो। २०१२ मा एकै महिना भित्र दुइ महत्वपूर्ण प्रतियोगिता क्रमशः आइसीसी वर्ल्ड क्रिकेट लिग डिभिजन फोर र एसीसी ट्रफी एलिट कपको उपाधि चुम्यो। प्रतियोगिता भरि अपराजित रही डिभिजन फोरको उपाधि चुम्नु र डिभिजन थ्रीमा उक्लिन सफल हुनु नेपालको लागि ठूलो गौरवको विषय हो। डिभिजन फोरको चर्चा सेलाउन नपाउदै नेपाल एसीसी ट्रपी एलिट कपको युएईसंगै सह विजेता बन्यो। यस




**कुनैबेला क्रिकेटको नाम लिन डराउन क्रिकेटको नियमबाट जानकार नभएकाहरु पनि अहिले "ओए नेपालको स्कोर कति भयो ?" भन्छन् आज भोलि। नेपालको खेल हुदा हजारौं दर्शक खेल हेर्न मैदानमा पुग्छन् अनि घाटी सुक्नेगरी हुटिङ्ग गर्छन्ः नेपाल नेपाल नेपाल।**

अघि दुइचोटी सोही प्रतियोगिताको उपविजेतामै सिमित रहन बाध्य भएको नेपाल आयोजक राष्ट्र युएई लाई फाइनलमा बराबरीमा रोक्दै संयुक्त विजेता बन्यो। यो सफलतासंगै नेपाल टेस्ट क्रिकेट नखेल्ने







चुनौती कहिले पनि सहज हुदैन तर चुनाती पुरा गर्न आत्मविश्वासका साथ मैदानमा उत्रिनु पर्छ भन्ने अडान बोकेका नेपाली क्रिकेट टोलीका कप्तान पारस खड्काको आशाले क्रिकेट फ्यानलाई अझै हौस्याएको छ। समालोचकहरु भन्छन् "नेपाली क्रिकेटको घरेलु संरचनामा केहि परिर्वतन गरि त्यसमा जोड दिएमा नेपाली क्रिकेट साधैको लागि बलियो हुन्छ।"

राष्ट्रहरुको श्रेणीमा पहिलो नम्बरमा उक्लिएको छ। यी दुइ प्रतियोगिता सुरु हुनु अघि वर्षाको कारण नेपालले पुग्दो अभ्यास खेल खेल्न पाएको थिएन। केहि खेलाडीहरु चोटग्रस्त थिए। तर खेलाडीहरुले आफ्नो जर्सी अगाडी लेखिएको आफ्नो राष्ट्रको नामको सम्मान गरेर उपाधि घर ल्याए।

दुवै प्रतियोगितामा नेपालको परम्परागत समस्या मानिएको ब्याटिंगको पनि रुप फेरियो। डिभिजन फोरमा सुबाश खकुरेल र अनिल मण्डलले सतक हाने भने एसीसी ट्रफी एलिट कपमा कप्तान पारस खड्काले सतक प्रहार गरे। यसैगरि एसीसी ट्रफी एलिट कपमा नै उपकप्तान ज्ञानेन्द्र मल्लले मात्र १८ बलमा अंधसतक पुरा गरे।

डिभिजन फोरको को उपाधि घर ल्याएका खेलाडी हरुलाई स्वागत गर्न ठुलै जमातमा क्रिकेट प्रेमीहरु त्रिभुवन अन्तराष्ट्रिय विमानस्थल पुगे, तेसै गरि एसीसी ट्रफी एलिट कपको संयुक्त विजेता नेपाली टोलीलाई मध्यरातमा भए पनि स्वागत गर्न त्रिभुवन अन्तराष्ट्रिय विमानस्थल पुग्न क्रिकेटप्रेमीहरु पछि परेनन्। यस्तै विजयको बानी परेका खेलाडी र डाय हार्ट फ्यानले जर्ज बर्नाड साको

'क्रिकेट खेल्ने मुर्ख र हेर्ने महामुर्ख' भन्ने भनाइलाई नै हास्यास्पद बनाईदीइएका छन्।

सफलतासंगै चुनौती थपिन्छ नै। नेपालको अबको चुनौती भनेको अप्रिलमा बर्मुडामा हुने आइसीसी डिभिजन थ्री हो। जसमा नेपालले ओमान, इटाली, र्बमुडा, यूएसए र युगान्डा को सामना गर्नेछ। डिभिजन थ्रीको तयारीको लागि आफुले राम्रो रणनीति तयार पारेको बताउँछन्, नेपाली क्रिकेट टोलीका प्रशिक्षक पुबुदु दासानायके। "नेपाली खेलाडी प्राकृतिक रुपमै चलाख र तेजिलो छन्।" उनी खेलाडीहरुको आत्मविश्वास बढ्दै गएकोले नेपालले डिभिजन थ्रीमा राम्रो नतिजा ल्याउनेमा विश्वस्त छन्। नेपाली खेलाडीले पछिल्ला खेलहरुमा गरेको प्रर्दशन जारी राखे नेपाल पनि टेस्ट खेल्ने समेत बन्ने उनको ठम्याई छ। डिभिजन थ्री टोलि छनौटलाई लक्षित गरी क्लब स्तरीय प्रतियोगिता गराउने तयारी चलिरहेको नेपाल क्रिकेट एशोसिएसनका सदस्य किरण राणा बताउँछन्।

चुनौती कहिले पनि सहज हुदैन तर चुनाती पुरा गर्न आत्मविश्वासका साथ मैदानमा उत्रिनु पर्छ भन्ने अडान बोकेका नेपाली क्रिकेट टोलीका कप्तान पारस खड्काको आशाले क्रिकेट फ्यानलाई अझै हौस्याएको छ। समालोचकहरु भन्छन्, "नेपाली क्रिकेटको घरेलु संरचनामा केहि परिर्वतन गरि त्यसमा जोड दिएमा नेपाली क्रिकेट सँधैको लागि बलियो हुन्छ।"

बिना कुनै लगानी र एउटा राम्रो रंगशालासम्म पनि नभएको अवस्थामा नेपाली क्रिकेटले पाएको सफलता पक्कै पनि अतुलनीय छ। नेपाली क्रिकेटले पाएको सफलताको कदर गर्दै सरकारी तथा निजी संस्थाले क्रिकेटमा लगानी गर्नु आवश्यक छ जसले नेपाली क्रिकेटलाई बलियो बनाउदै नयाँ सफलता र चुनौतीप्रति उन्मुख गराउने छ। सबैलाई शुभकामना।

# 'भुत'

- राजु दाहाल



हिजो हाम्रो घरमा, बत्ती जाने पालो थ्यो ।
जता फर्कि हेरेनी, अँधेरो र कालो थ्यो ॥

मैन बत्ती किन्न भनी, पसल जान लाग्या थेँ ।
सबै कालो देखेर, छिटो छिटो भाग्या थेँ ॥

पसल गई मैनबत्ती, किनेर म फर्किएँ ।
सेतो भुत बरण्डामा, देखेर म तर्सिएँ ॥

बिना टाउको हात हल्लाई, नाचीराख्या देखेर ।
चिच्याउन पो लागेँ म त, हात खुट्टा फँकेर ॥

हल्ला खल्ला सबैतिर, त्यती खेरै भएछ ।
बत्ती पनि झुलुक्कै उत्ती खेरै आएछ ॥

सबै जना मिलेर के भो, सोध्न थाल्नुभो ।
हत्तपत्त आमा आई, अँगालोमा हाल्नु भो ॥

कुरा सुनी सबैजना, भुत खोज्न लागेको ।
देखि भुत बरण्डामा डर मेरो भागेको ।

हजुरबाको सेतो कुर्ता, सुकाको पो रहेछ ।
त्यही कुर्ता हावाले गर्दा, नाचेजस्तो भएछ ॥

भुतलाई देखेर, सबै हाँस्न थाल्नु भो ।
धत् सेतो कुर्ताले, कति बिघ्न लाजै भो ।

समाप्त

# एक हातको ताली अर्थात् 'थप्पड'

- गणेश आचार्य

एक हातले ताली बज्दैन । हामीले सुनेकै उखान हो । तर केही समयदेखि नेपालमा एक हातको ताली बजेका खबरहरुले चर्चा पाउन थालेका छन् । बुझ्नुभएन ? अर्काको गालामा थप्पड हानेर ताली बजाउने युवाहरुको कुरा गर्दैछु म ।

दोश्रो जनआन्दोलनमा निरंकुशता विरुद्धको अभियान चलाउने राजनीतिज्ञहरुले बोलेको प्रत्येक वाक्यमा सिटी र दुई हातले नै पररर ताली बजाउँथे युवाहरु । दुईहातले नै पार्टीका झण्डा, नेताको फोटोहरु समाएर जयजयकार गर्थे, राजाको पुत्ला पनि दुई हातले जलाए उनीहरुले । वैशाख ११ पछि आएको लोकतन्त्रले पनि स्वागतमा दुई हातको ताली र दुई करोड नेपालीको खुशी पायो । दुई वर्षमै संविधान लेख्ने म्याण्डेट बोकेर बनेको संविधानसभा पनि जनताको दुई हातले हालेको भोटको आधारमाबन्यो । तर त्यो खुशी र आशा दुई वर्ष पनि टिक्न सकेन । न संविधानबन्यो न त जनताका इच्छा, आकांक्षा, पुरा भए । दुईहातको तालीअहिले आएर एक हातको तालीमा परिणत भएको छ । एक हातको ताली अर्थात् थप्पड ।

यो वर्ष नेताहरुले थप्पड पाएको वर्षका रुपमा पनि चर्चित भयो । झक्कुप्रसाद सुवेदीबाट सुरु भएको थप्पड वर्षाको सिलसिला, झलनाथ खनाल, शुशील कोइराला, बाबुराम भट्टराई हुँदै पुष्पकमल दाहाल प्रचण्डसम्म आइपुग्यो । अझ अर्को भयानक विडम्बना, ती सबै थप्पड हान्नेहरु उनीहरुको आफ्नै पार्टीका कार्यकर्ता भएको पाइए ।

## झक्कुप्रसाद भर्सेज प्रेमराज




संविधानसभाको चुनावमा झक्कुप्रसाद सुवेदी र माधवकुमार नेपाल काठमाडौंको एउटै चुनाव क्षेत्रबाट लडे । तत्कालीन माओवादी हालको एमाओवादीका उम्मेदवार थिए, झक्कुप्रसाद । उतिबेला उनका कार्यकर्ताले भरभरको बल लगाएर नारा लगाउँथे, "धाकभन्दा धक्कु ठुलो, माधवभन्दा झक्कु ठुलो ।" झक्कुप्रसाद सुवेदी लगायत धेरै माओवादीका नयाँ नेताहरुले पुराना अनि नाम चलेका नेताहरुलाई चुनावमा नराम्रोसंग हराए । यसलाई जनताले स्वाद फेर्न चाहेको भनेर बुझ्नुपर्छ भन्छन् जानकारहरु । सँधै भात मात्र खाएर नहुने, कहिलेकाहीं खिर चाख्नुपर्छ भनेर भात हटाइयो अनि खिरलाई प्राथमिकता दिइयो । तर त्यो खिर पनि बैगुनी निस्केपछि त्यसैमाथि रिस खनियो ।

संविधानसभाको बैठक सकेर झक्कुप्रसाद राजधानीको तिनकुने हुँदै आफ्नो डेरा बालकुमारीतीर जाँदै थिए । बाटोमा पर्ने तीनकुने कफी सपका साहुजी प्रेमराज देवकोटाले उनलाई बोलाए । देवकोटाले खुसुक्क सोधे, "संविधानकहिले बन्छ, सभासद् ज्यू ?" झक्कुको उत्तर आयो, "काम गर्दैछौं क्यारे, हेर्दै जाउँ ।" देवकोटाको तातेको कन्सिरी अझ चर्कियो । उनले झक्कुलाई २ थप्पड लगाए । त्यत्तिन्जेल उनको यो हर्कत हेर्न मान्छेहरु जम्मा भैसकेका थिए । छेउछाउका मान्छेले उनलाई रोके र प्रहरीको जिम्मा लगाए । थाहा भयो उनी माओवादी समर्थित मान्छे नै रैछन् । नेतामाथि प्रहार भएको थप्पडको यो पहिलो अध्याय थियो ।

## देवीप्रसादको प्रसाद



संयोगवश दोश्रो थप्पड खाने नेताको नाम पनि झ अक्षरबाटै सुरु हुन्थ्यो । २०६८ को माघ महिनामा एमाले अध्यक्ष झलनाथ खनाल आफ्नै कार्यकर्ता देवीप्रसाद रेग्मीको आक्रमणमा परे । रातो टिका लगाएर नवप्रवेशीहरुलाई पार्टीमा स्वागत गरिरहेका बेला, झलनाथको गालामा चड्कन बर्जियो, इटहरीको एक कार्यक्रममा ।

स्वागत गर्दै टिका लगाइदिन खोज्दा, देवीप्रसादले झलनाथको हात पन्छाए । अनि त्यही मौकाको फाइदा उठाएर चड्कन लगाए उनले । झलनाथको नाकबाट रगत निस्क्यो, चश्मा भुइँमा झऱ्यो । खनालका अंगरक्षकले देवीप्रसादलाई धकेले र अरु नवप्रवेशी तथा पुरानाकार्यकर्ताले कुट्ने सुर कसेपछि प्रहरीले उनलाई नियन्त्रणमा लियो । झलनाथलाई चाहीं देवीप्रसादको थप्पड प्रसाद जस्तै बन्यो । उनी केही समयमा प्रधानमन्त्री बने । त्यसपछि थप्पडको कुरा आउने वित्तिकै त्यो नेता प्रधानमन्त्री हुन्छ भन्दै व्यंग्य समेत गरिन्छ ।

## कुर्सीप्रेमी बाबुरामलाई कुर्सीकै झटारो



माओवादी पार्टी फुट्न लागिरहेकै बेला, वैद्य र प्रचण्ड समुहका कार्यकर्ताबीच पनि पानी बाराबारको स्थिती थियो । कार्यकर्ता प्रशिक्षण चल्दै थियो, राजधानीको भृकुटीमण्डपमा । लडाकु समायोजनमा सहमति गरेर बाबुरामले वैद्य पक्षका पूर्व लडाकुलाई खुबै चिढ्याएका रैछन् । त्यही प्रशिक्षणमा बाबुरामलाई मञ्चको नजिकै बसेका एक कार्यकर्ताले कुर्सीको झटारो हाने । तर त्यो कुर्सीको चोट बाबुरामलाई लागेन । त्यसपछिको स्थिती साम्य पार्न ठुला नेतालाई हम्मे हम्मे पर्‍यो ।

## चिर्पटको चोट



काँग्रेस सभापति सुशील कोइराला कपनमा पार्टीको सम्मलेन उद्घाटनका लागि पुगेका थिए । कार्यक्रममा उनीलगायत काँग्रेसका उच्चतहका नेताहरु पनि मञ्चमै विराजमान थिए । पार्टीकै कार्यकर्ता प्रवेश बस्नेत मञ्चमा उक्लिन प्रयास गरे । सबै जनाले सोचे उनले सबैलाई नमस्कार गर्न खोजेका हुन् र स्वागत गर्न तम्सेकाहोलान् । तर उनको हातको चिर्पटमा कसैको नजर गएन । उनले झटारो हाने चिर्पटको र उनको निशाना थिए, सुशील कोइराला । तर भाग्यवशत्यो झटारो कसैलाई लागेन । देश बिगार्ने नेता भन्दै उनले चिर्पटको झटारो हानेका थिए ।

मञ्च मुन्तिर बसेका अन्य युवाहरुले प्रवेशलाई घिसारे । मञ्चका ठूला नेताहरु पनि उठे । गगन थापा मञ्चबाट हाम्फालेर प्रवेशलाई ती युवाहरुको उत्कापात बज्रपातबाट जोगाए । व्यंग्य नै सही, उनी माथिको आक्रमणले उनलाई चाहीं प्रधानमन्त्री हुने बाटो खोलिदिएन ।

## प्रचण्डमाथि पदमको प्रचण्ड प्रहार





एमाओवादी अध्यक्ष पुष्पकमल दाहाल प्रचण्ड प्रहारको पछिल्लो शिकार बने । र अहिलेसम्मकै सबैभन्दा चर्चा पाएको थप्पड पनि त्यही बन्यो । थप्पड हानेका थिए, पदम कुँवर नाम गरेका पूर्व माओवादी सेनाले । उनका धेरै आफन्त माओवादी नै । उनको परिवारका केही सदस्यले माओवादी युद्धमा समेत साथ दिएका रैछन् । केहीको शरीरमा लागेको गोलीको छर्रा अझै निकालिएको रैनछ । गाउँघरबाट विस्थापित परिवार । पार्टीको लागि गरेको त्यागले मिथ्या रुप लिएको भान भएरै होला सायद पदमले काठमाडौको भृकुटीमण्डपमै एक कार्यक्रममा आफ्नै नेता प्रचण्डलाई थप्पड हिर्काए ।

थप्पड हिर्काएर मन शान्त बनाउने प्रयास गरेका पदमले सायदै सोचेको कुरा भयो त्यसपछि । उनी माथि थुप्रै कार्यकर्ता जाइलागे । छिनभरमै रक्ताम्मे भए । न त प्रचण्डले उनीहरुलाई रोके, न त अरु सुरक्षाकर्मीले । सबैले देख्नेगरी पदम तीन चार जनाको भकुराइमा परे । यदि २ मिनेट पछि मात्र प्रहरीले बल प्रयोग गरेर नरोकेको भए सायद उनीहरुले सिध्याइदिन्थे होला पदमलाई ।

पदमलाई सार्वजनिक मुद्दा लगाएर २८ हजार जरिवाना गराइयो । पैसा तिर्न नसकेपछि उनलाई जेल हालियो । तर प्रचण्डले नै पैसा तिरेर छुटाउन लगाए । पदमले भने उनको हैन अर्कैले विदेशबाट पठाएको पैसाबाट आफ्नो जरिवाना रकम तिरे ।

### किन हाने उनीहरुले थप्पड ?

यसरी नेताहरुलाई थप्पड हान्नेहरु त्यही नेताका कार्यकर्ता हुने गरेको पाइएको छ । आफ्नै नेता भएर पनि आफूलाई परेको दुःख पीर नबुझेको, बाचा गरेका कुराहरु पुरा नगरेको, देशलाई बन्धक बनाएको लगायतका कुरामा चित्त नबुझेपछि नै उनीहरुले थप्पड हानेको कुरा स्पष्ट छ । लामो समयसम्म पनि सहमतिको वातावरण बनाउन नसकेको, देशलाई अर्बौंको घाटा लगाएको लगायतका कुराले प्रत्येक नेपालीको चित्त त दुखेको छ नै, अनि त्यो थप्पड त्यही प्रतिनिधी नेपालीहरुको हो भन्ने जानकारहरु पनि छन् । एकथरी चाहीं यो नेपालीहरुको संयमता पो हो भन्छन् किनकी थप्पडको सट्टा अरुनै केही पनि हुन सक्थ्यो । सबैको कुरा एक ठाउँमा ठिक छन् । यो थप्पड निराशाकै प्रतीक हो । भलै त्यसमा थप्पड हान्ने र खानेको बीचमा व्यक्तिगत कथा जोडिएको होस् ।

### थप्पड समाधान हो त ?

थप्पडलाई निराशा व्यक्त गर्ने माध्यम हो भन्ने तर्क गर्नेहरु यसलाई समाधान नै नभएपनि समाधानको बाटो हो भन्छन् । कमसेकम यसले अरु नेताहरुलाई पनि संयमित र अझै सजग भएर जनताको काम गर्न लालायित पार्न सक्छ । यसकै कारण नेताहरुले आफ्नो कमजोरी र नजरअन्दाजीलाई सम्झन सक्छन् अनि आफ्ना दिनचर्यामा बदलाब ल्याउन सक्छन् ।

तर थप्पडलाई समाधान हैन हिंसा भड्काउने कुरा हो भन्नेहरुको पनि ठुलै जमात छ । आफूलाई टोक्ने कुकुरलाई टोक्दै हिंड्ने हो भने भोलिको अवस्था कस्तो आउला । यदि त्यो व्यक्तिको सजाय कानुन आफ्नै हातमा लिएर भौतिक आक्रमण गर्ने हो भने भोलिको दिन अवश्य सुरक्षित छैन । बाटोमा हिंड्दा झुक्किएर दुर्घटना भयो भने त्यो दुर्घटना गराउनेलाई वरिपरीका मान्छेले जिउँदो छोड्दैनन् ।

यो विषयलाई अझ अर्को कोणबाट हेर्नेहरु पनि छन् । पहिलो सजायको भागिदार त तिनै नेताहरु हुन् । अहिले थप्पड हान्नेहरुले त एक दुई थप्पड हाने नेताहरुलाई । तर ती नेताहरुले प्रत्येक समय प्रत्येक नेपालीलाई भावनात्मक थप्पड हानेका छन् जो भौतिक थप्पड भन्दा धेरै दुख्ने खालको छ । खै त उनीहरुलाई कार्बाही ?

# अपरम्पार भंसारको संसार

**घटना १**

ओछ्यानबाटै ख्वाँक्क खोक्दै फोन उठाएँ, "हेलो!"

"गणेश जी ! सञ्चो छैन जस्तो छ। म सुन्धारा हुलाकबाट बोलेको। तपाईको सामान आएको छ क्यानडाबाट । लिन आउनुपऱ्यो ।"

"हीं आउनुस् न । अनि कुरा गरौंला ।"

**घटना २**

पर्सीपल्ट साथी राकेशसंगै सुन्धारा स्थित हुलाकको २९ नम्बर कोठामा गएँ। त्यहाँबाट मेरो नाम लेखिएको कागज निकालें अनि लागें ३१ नम्बर कोठा, भन्सार शाखातीर। यो कोठामा पहिलो पटक काम लिएर छिरेको थिए। भित्र बसेका ६ जनाले नै टुलुक्क मुखमा हेरे। एक हात जति लामो रातो फाराम दिए एकजना कर्मचारीले अनि भर्न लगाए। भरिसकेपछि २५ रुपैयाँ दस्तुर बुझाएँ। छेउका कर्मचारीले, "सामान हेर्न जाउँ" भने । पल्लो कोठामा राखिएको सामानको डब्बा चक्कुले खोले, सामान निकालेर ओल्टाई पल्टाई हेरे अनि आफ्नै टेबुलमा फर्के। सुसुल्दै क्याल्कुलेटरमा भएभरको शक्ति लगाएर अंक थिचे अनि मुसुक्क हाँस्दै भने, "१८ हजार लाग्छ।"

"कसरी ?"

"भन्सार तिर्नुपर्दैन त ? १५ प्रतिशत भन्सार, १३ प्रतिशत भ्याट अनि ५ प्रतिशत अन्तशुल्क।"

"त्यत्रो बिधी लाग्छ र ?"

पाकेटमा त्यति पैसा थिएन । तर मनमा अकस्मात त्यो भन्दा ठूलो शंका उब्जेर आयो। प्वाक्क सोधिहालें, "खै त्यति तिर्नुपर्छ भनेर कहाँ लेखेको छ ?"

"छ नी। नियममा।"

कड्केर "देखाउनुस् न त।" भनेको उनको मुख रातोकालो भैहाल्यो। अन्कनाउँदै दराज खोले, एउटा थोत्रो फाइल निकाले साथमा एउटा रातो रंगको किताब पनि। पाना पल्टाएर विवरणतीरको भाग बुढी औंलाले छोपेर दस्तुर लेखेको मात्रै देखाए।

"ल हेर्नुस् ! १५ प्रतिशत।"

"खै मलाई नै दिनुस् त हेरौं।"

उनले देखाएको भन्सार दस्तुर अर्कै शीर्षकको थियो। उनले देखाएको पानाको ५ पानाजति अगाडी पल्टाएर 'डिजिटल क्यामेरा' को शीर्षक फेला पारें। त्यहाँ भन्सार शुल्कको महलमा लेखिएको थियो : "माफी"। अन्तशुल्क र भ्याटमात्रै तिरे पुग्ने रैछ।

"हयाँ हेर्नुस् सर। त्यसै अर्कै देखाउने ?"

तिनै कर्मचारीले निन्याउरो मुख पारेर क्यालकुलेटरमा फेरि हिसाब निकाले, ६ हजार ७ सय रुपैयाँ।

**घटना ३**

६ हजार ७ सय रुपैया तिर्नका लागि पाकेटबाट १ हजारका ७ वटा नोट निकालें र छेउमा बसेकी दिदीलाई दिएँ। दिदीले रसिद काटिन् अनि सोधिन्, "फिर्ता दिनु पर्छ र ?"

"पर्छ नी ! किन नपर्नु ?"

मुसुक्क हाँस्दै लाजै पचाएर फेरि सोधिन्, "कति फिर्ता गरुँ ?"

"खुरुक्क सबै पैसा दिनुस्।"

रिसाउँदै एक एक गरी उनले सयको ३ वटा नोट फिर्ता गरिन्।

**घटना ४**

दिदीले दिएको रसिद देखेर सम्झिएँ, अघिको रातो एकहाते फारामलाई तिरेको २५ रुपैयाँको रसिद माग्न झण्डै बिर्सेको।

"दाई रसिद दिनु न।"

"के को ?"

"अघि लगेको फारामको।"

"मिल्दैन।"

"किन नमिल्ने ? मैले पैसा तिरेपछि रसिद नपाउने भन्ने पनि हुन्छ ?"

"रसिद छैन भन्या नी।"



छेउमै आइपुगेका चुपचाप रहने क्यापधारी हाकिम सा'बलाई सोधें, "सर रसिद पाइँदैन रे त !"

हाकिमले घुरेर हेरेपछि त्यो कर्मचारीले चुपचाप टेबुलको घर्रा खोले र २५ रुपैयाँ निकालेर मलाई दिए। थाहा भयो, त्यो फारामको पैसै नपर्ने रैछ।

सामान हात पऱ्यो। खोलेर सबै चेक गरें। एउटा क्यामेराको डब्बा च्यातिएको थियो तर भित्रको सामान सकुशल नै भेटें। मेरो काँधमा निलो डोरीसंगै झुण्डेको परिचयपत्र देखेर एकजना कर्मचारीले बाठो भएर बोलिहाले, "तपाई मिडियाको मान्छे हुनुहुँदो रैछ। त्यही भएर काम छिटो भयो। नत्र त्यति सस्तोमा कहाँ हुन्छ ?"

झन्किएँ, "ल त्यसोभए राख्नुस् यो सामान यहीं।

**घटना ५**

एकछिन अलि कर्कैरै बोलेछु क्यारे, सबै कर्मचारीले हेर्न र हेरिरहन भ्याए। निस्कनै लाग्दा अर्का कर्मचारीले हाँसेर अफर गरे, "यसो चिया खान आउनुस् न कैलेकाहीं।"

"माफ गर्नुहोला। मसंग चिया खाँदा करिब एक घण्टा त अवश्य नै बिताउनुहुन्छ होला। बरु त्यो एक घण्टामा म जस्तै काम लिएर आएका अरु ४ जनाको काम कानुन अनुसार गरिदिनुहोला। धन्यवाद।" निस्कें त्यसपछि।